१-१० : माघ ७ गते सम्पन्न दिव्य गुरु महोत्सव ।

११-१५ : माघ २९ गते सम्पन्न समीक्षात्मक कार्यक्रम ।

● वर्ष १२ ● अङ्क ७ ● फाल्गुण २०६७ ● पूर्णाङ्क १३९

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा*** **प्रकाशित**

## शिव विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

## जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

सर्वप्रथम त सिद्धाश्रम शक्ति केन्द्रले हालै सम्पन्न गरेको अन्तर्राष्ट्रिय साधना शिविर कार्यक्रम तथा पूजनीय गुरुमाताको राष्ट्रिय अभिनन्दन कार्यक्रम सफल बनाउन सहयोग गर्ने समस्त कार्यकर्ता, साधकसाधिका, भक्तजनहरुलाई सिद्धाश्रम शक्ति केन्द्र हार्दिक धन्यवाद ज्ञापन गर्दछ। इतिहासमा नै गर्व गर्न लायक यस साधना शिविर कार्यक्रम सारा शिष्यहरुका लागि पनि गर्व गर्ने विषय रह्यो। पूजनीय गुरुमातालाई सम्माननीय उपराष्ट्रपतिज्यूले राष्ट्रियरुपमा सम्मान गर्नुभएर सारा नेपालीहरुको प्रतिनिधित्व मात्र नभई सारा विश्वभरका शिष्यहरुको तर्फबाट सम्मान भएको ठानेका छौँ। यसरी पूजनीय गुरुमाताको राष्ट्रिय अभिनन्दन पहिलोपटक भएकोले इतिहासमा नै स्वर्णिम अक्षरले लेखिएको छ। त्यस्तै, यस शिविरमा एकैपटक दुई हजारभन्दा बढी साधकसाधिकाहरुले गुरुमन्त्र प्राप्त गर्ने सौभाग्य प्राप्त गरेका थिए जुन इतिहासमा नै पहिलोपल्ट थियो। त्यस्तै, पूजनीय गुरुमाताले पहिलोपल्ट गुरुमन्त्र प्रदान गर्नुभएर इतिहासमा नै अद्वितीयता प्रदान गर्नुभएको थियो। यसरी शिविरमा प्रत्येक कुराहरु अद्वितीय थिए, प्रशंसालायक थिए। 'शिविर होस् त' यस्तो भन्नेहरुको प्रशंसाले शिविरको दिव्यता झल्काएको महसुस हुन्थ्यो। त्यस्तै भारतबाट आउने गुरु सेवकसेविकाहरु, भजन गाउनेहरु, अरविन्द गुरुको सेवामा लाग्नेहरु, स्टलमा गुरुकार्य गर्नेहरु, सम्पूर्ण कार्यकर्ताहरुको प्रशंसा, आजसम्म थुप्रै शिविरमा भाग लियौँ, यस्तो ऐतिहासिक शिविर त भएकै थिएन भनेको सुन्दा सबै हर्षित र गर्वित थिए। यसरी नेपाल भारतको इतिहासमा नै गर्वलायक यस शिविरले आफ्नै विशिष्ट महत्त्व राख्दछ।

सिद्धाश्रम शक्ति केन्द्रले यस्तो दिव्य एवं ऐतिहासिक शिविर मात्रै सम्पन्न गरेन, पूजनीय गुरुमातालाई आश्रममा ल्याउन सफल भयो। त्यति मात्रै होइन, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा समेत लगेर सम्मानित गर्ने सौभाग्य प्राप्त गर्‍यो, सारा विद्यार्थीहरुलाई सरस्वती दीक्षा प्राप्त गर्ने सौभाग्य मिल्यो। यसरी वर्षौँदेखिको चाहना सिद्धाश्रम शक्ति केन्द्रले पूरा गर्न सफल भयो।

परमपूज्य सद्गुरुदेवहरुको कृपा एवं आशीर्वाद प्राप्त गर्दै जीवनलाई उच्चतामा लैजाने प्रयास प्रयत्न सबैले गरिरहेका हुन्छन्। यहि प्राप्तिलाई सहज बनाउनु सबैको उद्देश्य पनि हुन्छ। हाम्रा धर्म, संस्कृतिभित्रका विभिन्न चाडपर्वले आफ्नै विशेष महत्त्व राख्ने गर्दछ। यसै क्रममा भगवान् शिवको दिव्य कृपा, आशीर्वाद प्राप्त गर्ने दिनको रुपमा भगवान् शिवलाई खुसी बनाउन सकिने दिव्य पर्वको रुपमा महाशिवरात्रीलाई लिने गरिन्छ।

हाम्रा परमाराध्य सद्गुरुदेवहरु दुवैजना शिवस्वरुप हुनुभएकोले पनि शिवरात्रीको दिन आफैँमा महत्त्वपूर्ण दिनको रुपमा रहँदै आएको छ।

महाशिवरात्रीको दिन गरेका पूजा, व्रत, जप, तप आफैँमा विशेष हुने गर्दछ। यसैले यसपालि सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्गुरुदेव श्री शिवगोरक्ष प्रथमपटक प्रकट हुनुभएको गोरखास्थित गोरख गुफामा अखण्ड सवा करोड मन्त्रजप कार्यक्रमको आयोजना गरेको छ। यस दिव्य कार्यक्रममा सहभागी भई आफ्नो तपस्यालाई, पूण्यकर्मलाई बढाऔँ। गुरु गोरखनाथ प्रथमपटक प्रकट हुनुभएको यस दिव्य, चैतन्य शक्तिपीठमा बसेर जप, तपमा लाग्न पाउनु आफैँमा अहोभाग्य हो। यसैले यस्तो दिव्य अवसरमा तपाईँ हामी सबै सहभागी भई यस कार्यक्रमलाई सफल बनाउने कोशिस गरौँ।

अन्त्यमा, यसपालि 'शिव विशेष'को रुपमा यो पत्रिका तपाईँहरुको हातमा छ। भगवान् शिवको विराट्ता, उच्चता, दिव्यता शब्दमा व्याख्या गर्न सकिँदैन। तैपनि केही प्रसंगलाई समेट्ने कोशिस गरेका छौँ। यस अंकलाई 'शिव विशेष'को रुपमा निकाल्ने क्रममा हामीबाट भए गरेका सम्पूर्ण गल्ती, कमी कमजोरीका लागि परमपूज्य सद्गुरुदेवहरुसँग र यहाँहरुसँग क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौँ। अस्तु।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

जीव अनन्तानन्त-पाप-ताप-सन्तापबाट संत्रस्त भएर जहाँ परम विश्रामका लागि शयन गर्छन्, त्यस सर्वाधिष्ठान, सर्वाश्रयलाई नै शिव भनिन्छ । यस संसारमा कल्याणका लागि प्राणीहरू त्यसै परमशिवतत्त्वको शरणमा जानु आवश्यक छ । शिवतत्त्वको दर्शनबाट परमशान्तिको प्राप्ति हुन्छ, मनुष्यले सबै प्रकारका दुःख, कष्ट र रोगादि बिर्सन्छ, मृत्युभयको महसुससम्म पनि समाप्त हुन जान्छ ।

शिवका उपासक समद्रष्टा हुनु आवश्यक छ । ब्रह्मा, विष्णु, राम, कृष्ण, दुर्गा सबैलाई आदर गरेर सबैमा परमशिवतत्त्वको दर्शन गर्नुपर्दछ । मुण्डमालातन्त्रमा उल्लेख छ–

**रुद्रस्य चिंतनादुद्रो विष्णुः स्याद्विष्णुचिंतनात् ।**
**दुर्गायाश्चिन्तनाद्दुर्गा भवत्येव न संशयः ॥**
**यथा शिवस्तथा दुर्गा या दुर्गा विष्णुरेव सः ।**
**अत्र यः कुरते भेदं स नरो मूढ परिचिंतयेत् ।**
**भेदकृन्नरकं याति रौरवं नात्र संशयः ॥**

श्रुतिले पनि भन्छ कि संसारमा जे जति देखिन्छन्, सुनिन्छन् ती सबै परमशिवतत्त्व हुन्–

**सर्व देवात्मको रुद्रः सर्वे देवाः शिवात्मकाः ।**
**रुद्रस्य दक्षिणे पार्श्वे रविर्ब्रह्मा पयोऽग्नयः ।**
**वामपार्श्वे उमादेवी विष्णुः सोमोऽपि ते त्रयः ।**
**या उमा सा स्वयं विष्णुर्यो विष्णुः स हि चंद्रमा ॥**
**ये नमस्यन्ति गोविन्दं ते नमस्यन्ति शंकरम् ।**
**येऽर्चयन्ति हरिं भक्त्या तेऽर्चयन्ति वृषध्वजम् ॥**

उनै परम शिवतत्त्व नै सबैतिर समाएको छ । उनै भजनीय तत्त्व हुन्, उनै माननीय शक्ति हुन्, उनै पूजनीय तत्त्व हुन्, उनै विश्वरूप हुन्, उनै पूर्ण चैतन्य स्वरूप हुन् र परम आत्मा हुन् ।

सृष्टिका तीन आयाम छन्– उद्भव, विकास र समाप्ति । ब्रह्मालाई सृजनका अधिपति मानिन्छ । उनी सृष्टिकर्ता हुन् । संसारमा जे जति उत्पन्न हुन्छन्, ती सबै ब्रह्माका नै कृतित्व हुन् । पालनपोषणको व्यवस्था भने विष्णुमाथि छ । उत्पत्ति र पालनपछि तेस्रो पक्ष समापनको हो । सृष्टिको समापनको व्यवस्था गर्ने तेस्रो ईश्वरीय शक्तिको नाम शिव हुन् । रोग, शोक र मृत्युतुल्य संकटलाई निवारण गर्ने शिव हुन् । समस्त देवताहरूमा तुरुन्तै प्रसन्न हुने देवता शिवजी हुन् । यसैले उनको एक नाम आशुतोष पनि हो । अन्य देवताहरूको चरित्रमा

कहीं न कहीं वैभव विलास, सत्तालोभ र कूटनीतिको झलक पाइए पनि शिव भने त्याग, सादगी, निस्पृहता एवं सरलताका साक्षात् स्वरूप हुन् ।

अन्य देवताहरूले जसलाई तुच्छ ठानेर अस्वीकार गरेका थिए, शिवजीले उसैलाई परम प्रसन्न भावले अपनाए । अन्य देवताहरू रम्यपुरीमा, वैभाव विलासले युक्त भवनमा एवं राजमहमा निवास गर्दछन्, रक्ताम्बर धारण गर्दछन्, उनीहरूका आभूषण, पात्र, गृहसज्जा, दासदासी सबै सुसज्जित, वैभव प्रदर्शन र भौतिक सुख सुविधाका पूरक हुन् भने शिवजीलाई यी कुरामा कुनै रुचि छैन । उनी भोलेनाथ हुन्, औघडदानी हुन्, अवधूत हुन्, उनी परम विरागी, महान् योगी र इर्ष्या, द्वेष, रोग, शोकले सर्वदा असम्पृक्त रहँदै आफ्ना भक्तहरूको कल्याण गर्दछन् । उनीजस्ता महादानी र कृपाली देवता कुनै छैनन् । उदारताका सजीव प्रतिमा शिव त्रिकालमा, त्रिभुवनमा, देवाधिदेव, सृष्टिका अन्तिम आयाम (संहार) का नियामक र अखिल विश्वब्रह्माण्डका प्रशासक हुन् ।

गीतामा भगवान् श्रीकृष्णले भनेका छन्– रुद्राणां शंकरश्चास्मि अर्थात् परब्रह्म परमात्मा नै रुद्रमा

शंकर हुन् । शिवलाई शंकर भनिन्छ । शिवको तात्पर्य नित्य, विज्ञानानन्दघन परमात्मा हो । शंकरको 'शं' आनन्दबोधक हो र 'कर' गर्नेलाई प्रयुक्त हुन्छ अर्थात् जो प्राणीलाई आनन्द दिने छन्, उनैलाई आनन्दस्वरूप भनिन्छ । उनै शंकर अथवा शिव हुन् ।

शास्त्रमा शिवका महिमा अनन्त बताइएको छ । निर्गुणरूपमा उनै जगतका कर्ता, संहर्ता एवं पालनकर्ता हुन् । भक्तहरूमा अनुग्रह गर्नका लागि उनै सगुण हुन्छन् । वेद, पुराण, महाभारत, रामायण तथा स्मृति आदि धर्मशास्त्रमा ब्रह्मा, विष्णु तथा शंकरको एकताको ठाउँ ठाउँमा प्रतिपादन गरिएको छ । यति मात्रै होइन, शास्त्रहरूमा यी तिनैमा भेदबुद्धि राख्नेलाई पातकी भनिएको पाइन्छ ।

**शिवद्रोही मम दास कहावा,**
**सो नर मोहि सपनेहु न भावा ।**

मानसका यी पङ्क्तिमा विष्णुजीले शिवनिन्दकहरूलाई निन्दनीय बताएका छन् । वस्तुतः एकै तत्त्व ब्रह्मा, विष्णु एवं महादेवको रूपमा परिलक्षित हुन्छन् ।

**स ब्रह्मा स विष्णुः स रुद्रः**
**सशिवस्सोऽक्षरःसः यमःस्वराट् ।**

कैवल्योपनिषद्को यस पङ्क्तिबाट प्रमाणित हुन्छ कि शिव सच्चिदानन्दस्वरूप परब्रह्म हुन् । उनी सूक्ष्मभन्दा सूक्ष्म र स्थूलभन्दा स्थूल छन् । सारा जगत उनैको रूप हो । यो सृष्टि उनको लीला हो ।

शंकर जनजनका देवता हुन् । उनको भक्तिबाट ऋषिमुनि, देवदेवी, गन्धर्व, यक्ष, राक्षस, किन्नर, मनुष्य, पितृ, भूतप्रेत, अप्सरा तथा सिद्ध आदि सबैलाई अभीष्ट फलको प्राप्ति हुन्छ । उनको निष्काम पूजाबाट अन्तःकरण शुद्ध भएर व्यक्तिलाई ब्रह्मज्ञानको अनुभूति मात्रै हुने होइन, ब्रह्मको पनि प्राप्ति हुन्छ ।

सकाम पूजाबाट भक्तलाई भोग ऐश्वर्य प्राप्त हुन्छ । शिव आशुतोष हुन् । उनी थोरै साधनाबाट पनि प्रसन्न भएर मागेको वरदान दिन्छन् । रोग निवारण तथा अकाल मृत्युबाट मुक्ति दिलाउँछन् । यस्ता भोलेबाबा शिवको महिमाको वर्णन कसले गर्न सक्ला ?

ऋग्वेदका रुद्र, यजुर्वेदका शिव (शंकर), अथर्ववेदका महादेव (भव, शर्व), सामवेदका रुद्र, वाल्मीकिका महादेव, महाभारतका महादेव र शंकर तथा शिवपुराणका सदाशिव प्राचीनकालदेखि भक्तहरूका लागि आकर्षणको केन्द्र रहँदै आएका छन् । भक्तहरूलाई अभीष्ट फल दिनु, उनीहरूको कष्ट दूर गर्नु तथा उनीहरूलाई मुक्ति प्रदान गर्नु भगवान् शंकरका लागि सहज कार्य हो । उनी प्रसन्न भएर भक्तलाई सर्वस्व दिन पनि संकोच मान्दैनन् ।

भूमण्डलमा जति शिव पूजाको प्रचार भएको छ, त्यति अरू कुनै देवताको छैन । ब्रह्माविष्णुमहेश यी त्रिदेवहरूमा शिवको महिमा देवीभागवतमा सबैभन्दा धेरै बताइएको छ–

**स हि सर्वेश्वरो देवो विष्णोरपि च कारणम् ।**

विश्व जब संकटग्रस्त हुन जान्छ तब महादेवले त्यसको निवारण गर्छन् । सागरमंथनको अवसरमा कालकूट विषलाई देखेर ब्रह्मा, विष्णु, देव, असुर तथा ऋषिमुनि आदि सबै भयभीत भए । समस्त जगत विषको गर्मीबाट संतप्त भयो । अन्तमा सबै आशुतोष भगवान् शिवको शरण परे तथा उनको स्तुति गरे । प्रसन्न भएर त्यस विषलाई भूतभावन विश्वनाथ (महादेव) ले आफ्नो कंठमा राखे जसबाट उनको कंठ नीलो हुन गयो । फलतः वेदमा नीलग्रव नामबाट उनको प्रसिद्धि भयो ।

समस्त देव एवं मानवसमाजको कष्ट निवारणको योभन्दा ठूलो उदाहरण अरू कहाँ पाइएला ? उनी सदा सबैको कल्याणमा प्रवृत्त हुन्छन् । उनी अमङ्गल ह्रास, सुख एवं मङ्गलको वर्धन गर्ने हुन् । यसैले उनको मङ्गलमय नाम शिवलोकमा कल्याणको वाचक बन्न गएको छ । अतः श्वेताश्वरोपनिषद्मा जन्मदेखि मृत्युको भयबाट मुक्त हुन गरिएको प्रार्थना मननीय छ–

**अजात् इत्येवं कश्चिद् भीरुः प्रपद्यते ।**
**रुद्र यत्ते दक्षिण मुखं तेन पाहि नित्यम् ॥**

अर्थात्, हे रुद्र ! हजूर अजन्मा हुनुहुन्छ । जन्ममरणको चक्रबाट मुक्त गर्नु हजुरको स्वभाव हो । यो बुझेर जन्ममृत्युको भयबाट डराएका साधक हजुरको शरण लिन्छन् । हजुरको जुन कल्याण मुख छन्, त्यसबाट जन्ममृत्युको भयबाट मेरो सदा रक्षा गर्नुहोस् ।

रुद्र भगवान्को महिमाको वर्णन रुद्रहृदयोपनिषद्मा यसप्रकार गरिएको पाइन्छ–

**सर्वदेवात्मको रुद्रः सर्वे देवा शिवात्मकाः ।**
**रुद्रात्प्रवर्त्तते बीजं बीज योनिर्जनार्दनः ॥**
**यो रुद्रः स स्वयं ब्रह्मा यो ब्रह्मा स हुताशनः ।**
**ब्रह्मा विष्णुमयो रुद्र अग्नीषोमात्कं जगत् ॥**
**रुद्रः सूर्य उमा छाया तस्मै तस्यै नमो नमः ।**
**रुद्रो बह्निरुमा स्वाहा तस्मै तस्यै नमो नमः ॥**
**रुद्रो वेदः स्मृतिश्चोमा तस्मै तस्यै नमो नमः ।**

*विश्व जब संकटग्रस्त हुन जान्छ तब महादेवले त्यसको निवारण गर्छन् । सागरमंथनको अवसरमा कालकूट विषलाई देखेर ब्रह्मा, विष्णु, देव, असुर तथा ऋषिमुनि आदि सबै भयीत भए । समस्त जगत विषको गर्मीबाट संतप्त भयो । अन्तमा सबैले आशुतोष भगवान् शिवको शरण परे तथा उनको स्तुति गरे । प्रसन्न भएर त्यस विषलाई भूतभावन विश्वनाथ (महादेव) ले आफ्नो कंठमा राखे जसबाट उनको कंठ नीलो हुन गयो । फलतः वेदमा नीलग्रव नामबाट उनको प्रसिद्धि भयो ।*

**रुद्रो यज्ञ उमा वेदिस्तस्मै तस्यै नमो नमः ॥**
**रुद्रो नर उमा नारी तस्मै तस्यै नमो नमः ।**
**श्रीरुद्र–रुद्र–रुद्रति यस्तं ब्रूयाद् विचक्षणः ॥**
**कीर्त्तनात्सर्वदेवस्य सर्वपापैः प्रमुच्यते ।**
**ये रुद्रं नाभिजानन्ति ते न जानन्ति दैवतम् ॥**
**सर्वदेवात्मकं रुद्रं नमस्कुर्यात्पृथक् पृथक् ।**
**एभिर्मन्त्रपदैरेव नमस्यामीशपार्वतीम् ॥**

यी मन्त्रमा भगवान् शिवलाई नै मूल प्रकृति, पुरुषमय आदिदेव तथा साकार ब्रह्म बताइएको छ । वेदविहित यज्ञपुरष स्वयम्भू महादेव हुन् । वेदस्मृति शिवपार्वतीको रूप हो । यहाँ सर्वत्र उमाशंकरको नै दर्शन गर्ने उपदेश दिइएको पाइन्छ । यसरी दुष्टहरूलाई सबै पापबाट मुक्ति मिल्छ । अतः माता भगवती, जगदम्बा पार्वतीसहित भोलेनाथको पूजा गर्नाले भक्तलाई भुक्तिमुक्ति दुवै प्राप्त हुन्छ ।

शिवमहिमाको विषयमा श्वेताश्वरतरोपनिषद् भन्दछ–

**यदा तमस्तत्र दिवा न रात्रिर्नतत्र चासन्छिव एव केवलः । तदक्षरं तत्सवितुर्वरेण्यं प्रज्ञा च तस्मात् प्रसृता पुराणी ।**

अर्थात् सृष्टिको शुरुमा जब केवल अन्धकार मात्रै थियो, जब न दिन थियो, न रात नै, न सत् (कारण) थियो न असत् (कार्य) थियो । त्यस समय केवल निर्विकार शिव विद्यमान थिए । उनै अक्षर हुन्, उनै सबैका जनक परमेश्वरको प्रार्थनीय रूप हुन् तथा उनैबाट शास्त्रविद्याको प्रवर्तन भएको हो । यस श्रुतिमा भगवान् शिवलाई आदितत्त्वको रूपमा वर्णन गरेर शिवपुराणमा प्रतिपादित सदाशिवको स्वरूपलाई समर्थन गरिएको पाइन्छ । कल्याणकारी शिव प्रलय एवं संहारका पनि देवता मानिन्छन् । उनको प्रलयंकारीस्वरूपको वर्णन पनि शास्त्रहरूमा पाइन्छन् । उनको ताण्डवनृत्य यसै महाविनाशलीलाको अङ्ग हो । सृष्टि र प्रलय दुई अवश्यम्भावी तत्त्व हुन् । समस्त चराचर ब्रह्माण्डलाई आफूमा लीन गरेर उनी नयाँ सृष्टिकोउपक्रम गर्दछन् ।

**ते जन्माभाजः खलु जीवलोके ये वै सदा ध्यायन्ति विश्वनाथं ।**

**वाणी गुणात् स्तौति कथां श्रृणोति श्रोत्रद्वयं ते भगमुत्तरन्ति ॥**

अर्थात् जो सदा भगवान् शिवको ध्यान गर्दछ, वाणीले शिवको स्तुति गर्दछ र जसको दुवै कानले शिवको कथा सुन्दछ, यस जीवजगतमा उसैको जन्म सफल हो । ऊ निश्चय नै संसारसागरबाट पार हुन्छ ।

जय गुरुदेव !

# शिव पूजनमा ज्योतिर्लिङ्ग

*नेपालका पशुपतिनाथ निर्विवाद कज्योतिर्लिङ्ग हुन्, यसमा कुनै सन्देह रहँदैन । पुराणहरूमा ज्योतिर्लिङ्गको विशेषरूपले महिमा वर्णित छ । पशुपतिनाथको दर्शन नगरेमा केदारनाथको दर्शनको फल प्राप्त हुँदैन भन्ने पनि मान्यता रहिआएको छ ।*

शास्त्रहरूमा भनिएको छ कि भूतभावन शङ्कर भगवान् समस्त प्राणीहरूको कल्याणार्थ ज्योतिर्लिङ्गको रूपमा तीर्थमा निवास गर्नुहुन्छ । जुन जुन पुण्य स्थानमा विशिष्ट भक्तहरूले तपस्या गरे, विशेष पूजन गरे ती पवित्र ठाउँहरूमा ज्योतिर्लिङ्गको रूपमा स्वत: शिवलिङ्ग प्रादुर्भाव भए । प्रथमत: ज्योतिर्लिङ्ग के हो ? कस्ता शिवलिङ्गलाई ज्योतिर्लिङ्ग भनिन्छ ? आदि विषय मुख्यरूपमा मनन गर्नुपर्ने हुन्छ ।

ज्योतिर्लिङ्ग भगवान् शङ्करका ती शिवलिङ्ग हुन् जुन विशिष्ट तीर्थस्थलहरूमा शिवभक्तहरूको तपस्याबाट स्वयं आविर्भूत भएका हुन्छन् । यी अनादि हुन्छन् र मानवनिर्मित हुँदैनन् । यस्ता शिवलिङ्गहरू 'ज्योतिर्लिङ्ग' भनेर मानिएका छन् । शिवलिङ्गहरू त अनन्त छन् तर ज्योतिर्लिङ्गमा द्वादश (बाह्र) प्रख्यात छन् । शिवपुराणमा बाह्र तीर्थस्थलका बाह्रवटा शिवलिङ्गलाई 'द्वादशज्योतिर्लिङ्ग' प्रमुख हुन् भनेर उल्लेख गरेको पाइन्छ–

**सौराष्ट्रे सोमनाथं च श्रीशैले मल्लिकार्जुनम् ।**
**उज्जयिन्यां महाकालमोक्तारं परमेश्वरम् ॥**
**केदारं हिमवत्पृष्ठे डाकिन्यां भीमशक्तरम् ।**
**वाराणस्यां च विश्वेशं त्र्यम्बकं गौतमीतटे ॥**
**वैदनाथं चिताभूमौ नागेशं दारुकावने ।**
**सेतुबन्धं च रामेशं, घुश्मेशं च शिवालये ॥**
(शिवपुराण)

भारतको सौराष्ट्र (काठियावाड) गुजरातमा श्री सोमनाथ, मद्रासको श्रीशैल भन्ने ठाउँमा श्री मल्लिकार्जुन, उज्जयिनी (मध्यप्रदेश) मा श्री महाकाल, मध्यप्रदेशकै नर्मदा नदीको समीप श्री ओंकारेश्वर (यिनलाई अमरेश्वर पनि भन्दछन्) र भारतको उत्तराखण्डमा श्री केदारनाथ र नेपालका श्री पशुपतिनाथ (यी दुवै संयुक्तरूपमा) भारतको महाराष्ट्र प्रान्त मुम्बईनजिक डाकिनीमा श्री भीमशङ्कर, वाराणसी (काशीमा) श्री विश्वनाथ, मुम्बईनजिक नासिक, गोदावरी गौतमी नदीको तटमा श्री त्र्यम्बकेश्वर, बिहार प्रान्त जसीडीह चिताभूमिमा श्री वैद्यनाथ, गुजरात प्रान्तको दारुका वनमा श्री नागेश, दक्षिण भारत (सेतुबन्ध) मा श्री रामेश्वर, मध्यप्रदेशका शिवालयमा श्री घुस्मेश्वर गरी यी बाह्र शिवलिङ्गलाई 'द्वादशज्योतिर्लिङ्ग' भनिएको छ ।

यहाँ उल्लेख भएका ठाउँमा नेपालका श्री पशुपतिनाथको नाम परेको देखिँदैन जुन कुरा गलत देखिन्छ । पञ्चमुखी पशुपतिनाथ कसैले बनाएको कुराको इतिहास पनि पाइँदैन । यी अनादि हुन् । त्यसैले पशुपतिनाथ ज्योतिर्लिङ्ग

हुन् । 'मध्ये पशुपतिदेवो ज्योतिर्लिङ्गो विराजते' भनेर हिमवत्खण्डमा पशुपतिनाथलाई ज्योतिर्लिङ्ग भनी स्पष्टै उल्लेख गरिएको छ भने अन्य धेरै ठाउँमा भगवान् पशुपतिनाथलाई ज्योतिर्लिङ्ग भनिएको छ ।[1]

अर्को कुरा भारतको उत्तराखण्डबाट केदारनाथका (शिव) लाई ज्योतिर्लिङ्ग भनेर माथि शिवपुराणमा उल्लेख भएको व्यहोरा प्रस्तुत गरिएको छ । केदारनाथ शालीग्रामी शिलाका पुञ्ज वा शिलाखण्ड मात्र देखिन्छन् । केदारनाथ शिलारूपी ढाड हुन्, यिनको शिरोभाग नेपालका पशुपतिनाथ हुन् भनेर त्यहाँका विद्वान् पुजारीहरू पनि भन्ने गर्छन् । जब तलको भाग शिलाखण्ड ज्योतिर्लिङ्ग हुन्छ भने झन् उसैको शिरोभाग ज्योतिर्लिङ्ग नहुने भन्ने कुरा युक्तिसंगत देखिँदैन । तसर्थ नेपालका पशुपतिनाथ निर्विवाद 'ज्योतिर्लिङ्ग' हुन्, यसमा कुनै सन्देह रहँदैन । पुराणहरूमा ज्योतिर्लिङ्गको विशेषरूपले महिमा वर्णित छ । पशुपतिनाथको दर्शन नगरेमा केदारनाथको दर्शनको फल प्राप्त हुँदैन भन्ने पनि मान्यता रहिआएको छ ।

## शिवका अष्टमूर्तिहरू

भगवान् शिव, परमात्मा वा ब्रह्मको नै नामान्तर हो । यी शिव शान्त, अद्वैत र चतुर्थ हुन् । 'शान्तं शिवमद्वैतं चतुर्थम्' माण्डूक्योपनिषद् । यी विश्वाद्य, विश्वबीज, विश्वदेव, विश्वरूप र विश्वान्तर्यामी छन् । 'सर्वं खल्विदं ब्रह्म' यो समस्त ब्रह्माण्ड सबै ब्रह्ममय नै छ । त्यसैले बृहदारण्यकउपनिषद् भन्छ– जुन सर्वभूत ईश्वर समस्त ब्रह्माण्ड चर अचरमा व्याप्त रहेर पनि यिनीहरूबाट पृथक् छ । यसै सर्वभूत परमात्माले समस्त ब्रह्माण्डलाई नियन्त्रण गर्दछ । यो नै परम आत्मा हो । यो नै अन्तर्यामी अमृत भएर रहेको छ । त्यसैले गीतामा भनिएको छ–

**अहं शिवः शिवश्चायं त्वं चापि शिव एव हि ।**
**सर्वं शिवमयं ब्रह्मञ्शिवात् परं न किञ्चन ॥**

सम्पूर्ण जगत शिवमय छ, यसबाहेक अरू केही छैन । अखिल ब्रह्माण्ड शिवमै आधारित भएर रहेको छ । पृथ्वी, जल, तेज, वायु र आकाश यी पञ्चमहाभूत हुन् । यिनमा सूर्य, चन्द्र र जीवात्मा थपिँदा अष्टमूर्ति हुन जान्छन् । यिनै अष्टमूर्तिद्वारा समस्त चराचर जगतको बोध हुन्छ, अनि महादेवका 'अष्टमूर्ति' नामहरू सिद्ध हुन आउँछन् । त्यसैले विशपुराणमा भनिएको छ–

**तस्यादिदेवदेवस्य मूर्त्यष्टकमयं जगत् ।**
**तस्मिन् व्याप्य स्थितं विश्वं सूत्रे मणिगणा इव ॥**
**शर्वो भवस्तथा रुद्र उग्रो भीमः पशोःपतिः ।**

**ईशानश्च महादेवो मूर्तयश्चाष्टविश्रुताः ॥**

यिनै देवाधिदेवका अष्टमूर्तिहरूले यो अखिल ब्रह्माण्ड जगत यसरी व्याप्त भएर रहेको छ जसरी धागोमा मणिका दानाहरू उनिएर माला बनेको हुन्छ । भगवान् शङ्करका ती अष्टमूर्तिहरूका नाम यसप्रकार छन्– शर्व, भव, रुद्र, उग्र, भीम, पशुपति, महादेव र ईशान । यिनै शर्व आदि अष्टमूर्तिहरू क्रमशः पृथ्वी, जल, अग्नि, वायु, आकाश, क्षेत्रज्ञ (जीवात्मा), सूर्य र चन्द्रमामा अधिष्ठित भएर रहेका छन् । यस कुरालाई शिवपुराणमा अगाडि यसरी प्रष्ट पारिएको छ–

**भूम्यम्भोऽग्निमरुद्व्योमक्षेत्रज्ञार्कनिशाकराः ।**
**अधिष्ठिता महेशस्य शर्वादेरष्टमूर्तिभिः ॥**
**अष्टमूर्त्यामना विश्वमधिष्ठाय स्थितं शिवम् ।**
**भजस्व सर्वभावेन रुद्रं परमकारणम् ॥**

यिनै अष्टमूर्तिद्वारा विश्वमा अधिष्ठित त्यही परम कारण ईश्वरको सर्वतोभावेन आराधना गर्नुपर्दछ ।

भगवान् शिवका अष्टमूर्तिहरू–

१. ॐ **शर्वाय क्षितिमूर्तये नमः ।**
२. ॐ **भवाय जलमूर्तये नमः ।**
३. ॐ **रुद्राय अग्निमूर्तय नमः ।**
४. ॐ **उग्राय वायुमूर्तये नमः ।**
५. ॐ **भीमाय आकाशमूर्तय नमः ।**
६. ॐ **पशुपतये यजमानमूर्तये नमः ।**
७. ॐ **महादेवाय सोममूर्तये  नमः ।**
८. ॐ **ईशानाय सूर्यमूर्तये नामः ।**

पृथ्वी, जल आदि 'पञ्चमहाभूत' भए । जीवात्मा क्षेत्रज्ञ (यजमानस्वरूप) हो । वस्तुत: जीवन नै यजमानरूप भएर उपासना गर्छ, त्यसैले यसलाई यजमान भनिएको हो ।

पाशो वा मायाले युक्त जीव पशु हो । जीवको उद्धारकर्ता भएका कारणले महादेवलाई 'पशुपति' भनिएको हो । यिनै पशुपतिले जीवको पाशो विमोचन गर्दछन् ।

**ब्रह्माद्याः स्थावरान्तटाश्च देवदेवस्य शूलिनः ।**
**पशवः परिकीर्त्यन्ते संसारवशवर्तिनः ॥**
**तेषां पतित्वाद्देवेशः शिवः पशुपतिः स्मृतः**
**मलमायादिभिः पाशैः स बध्नाति पशून् पतिः ॥**
(शिवपुराण)

ब्रह्मादेखि स्थावर (वृक्ष-ढुङ्गामाटो आदि) जति पनि संसारवशवती जीव छन्, ती सबै देवाधिदेव महादेवका पशु हुन् । यी सबैका पति (मालिक) भएका कारण महादेव 'पशुपति' भनिन्छन् । समस्त पशुहरू मायामोह आदि अविद्याको पाशोमा जकडिएर रहेका हुन्छन् । भक्तजनहरूद्वारा पूजा उपासना गरिएपछि पशुपतिले उनीहरूलाई उक्त बन्धनबाट मुक्त गरिदिन्छन् । चौबीसै तत्त्व, माया कर्मगुणहरू 'विषय' भनिन्छन् । यिनै विषयहरूले जीवलाई बन्धनमा पारेका हुन्छन् । त्यसैले यी विषयहरूलाई पाशो भनिएको हो । महादेव सबै जीवका अधिष्ठाता र सबै क्षेत्रमा वास गर्ने हुनाले पशुपाशलाई काटिदिन्छन्, नाश गरिदिन्छन् । त्यसैले यिनलाई 'पशुपति' भनिएको हो र पशुपतिका नामले विख्यात् छन् ।

शिवपुराणको कथन छ कि परमात्मा शिवका यी आठ मूर्तिहरू समस्त संसारमा व्याप्त भएर रहेका छन् । संसारका अधिष्ठाता आधार शिव हुनाले यिनको पूजा उपासना गर्नाले अन्य देवताहरू पनि तृप्त हुने हुँदा शिव पूजनबाट समस्त विश्व नै हराभार हुन जाने हुन्छ ।

शिवको दर्शन वा शिवलाई आत्मानुभूति नगरिकन जन्ममरणरूप भवसागरबाट मुक्ति पाउन सकिँदैन । यस्तो भावना जागृत गर्नका लागि शिवका यी अष्टमूर्तिको पूजाको महत्त्व दर्शाइएको हो । वास्तवमा जीवदेह नै देवालय हो र माया (पाशो) देखि मुक्त भएपछि जीव नै सदाशिव हुन जान्छ । अज्ञानरूपी मललाई पखालेर सोऽहं भन्ने भावले उनै सदाशिवको पूजा, आराधना गर्नुपर्दछ–

**देहो देवालयः प्रोक्तो जीवो देवः सदाशिवः ।**
**त्यजेदज्ञाननिर्माल्यां सोऽहंभावेन पूजयेत् ॥**

शिव अष्टमूर्तिका प्रतीक हुन्– सूर्य प्रत्यक्ष देवता हुन् र शिवस्वरूप हुन् । चन्द्रमाको प्रतीकस्वरूप (भारतका) सोमनाथ ज्योतिर्लिङ्ग तीर्थ हुन् । शिवकाञ्ची (दक्षिण भारतका) शिवलिङ्ग पञ्चमहाभूत (पृथ्वी, जल, तेज, वायु र आकाश) का नामले पाँचवटा (शिवलिङ्ग) तीर्थ त्यहाँ छन् । यसमा जलका प्रतीक (नेपालकै महोत्तरी जिल्ला) जलेश्वर महादेव पनि हुन् ।

शिवका अष्टमूर्तिमध्ये जीवात्मा (क्षेत्रज्ञ) का प्रतीक यजमानस्वरूप भगवान् पशुपतिनाथ हुन् । वास्तवमा पशुपतिनाथ केवल शिवलिङ्गको रूपमा मात्र सीमित छैनन् । यिनमा पञ्चमुखी मानुषी विग्रहको झलक पनि देख्न पाइन्छ । त्यस्तो विग्रह कटिप्रदेशभन्दा माथिको भाग रहेको छ । त्यसैले पनि यी पञ्चमुखी ज्योतिर्लिङ्ग, अष्टमूर्तिका यजमानमूर्ति पशुपतिनाथको अरू विशेषता रहेको हो । यिनको दर्शन पूजनको महिमा अनन्त छ ।

महाकवि कालिदासले आफ्नो विख्यात 'अभिज्ञानशाकुन्तलम्' नाटक काव्यको मङ्गलाचरणमा

**'या सृष्टिः स्रष्टुराद्या वहति विधिहुतं**
**या हविर्या च होत्री**
**ये द्वे कालं विधत्तः श्रुतिविषयगुणा**
**या स्थिता व्याप्य विश्वम् ।**
**यामाहुः सर्वबीजप्रकृतिरिति यया**
**प्राणिनः प्राणवन्तः**
**प्रत्यक्षाभिः प्रपन्नस्तनुभिरवतु वस्ताभिरष्टाभिरीशः ॥'**

भनेर प्रत्यक्षीभूत शिवका यिनै अष्टमूर्तिहरूको ध्यान गरेका छन् । अष्टमूर्तिमा यजमानमूर्ति पशुपतिनाथ विशेष हुन् ।

*(स्रोत : तीर्थपर्यटन, युवराज शर्मा गौतम)*

---

१ **क्षेत्रं नेपालकं पुण्यं तीर्थैर्लिङ्गैस्तथामरैः**
**पशुपतीश्वरो यत्र ज्योतिर्लिङ्गो विराजते ॥**
(नेपाल माहात्म्य, हिमवत्खण्ड)

(नेपाल नाम गरेको क्षेत्र पुण्यदायी ठाउँ हो । यहाँ धेरै तीर्थहरू, शिवलिङ्गहरू र देवताहरू रहेका छन् । त्यसमा मुख्य ज्योतिर्लिङ्ग पशुपतिनाथ हुन् ।)

# शैवधर्म

*'Development of Hindu Iconography'/'हिन्दू समाज र धर्म'बाट शैवधर्मसम्बन्धी सामग्रीलाई यसै अङ्कदेखि क्रमश: प्रकाशित गर्दै लगिनेछ जसबाट शैवधर्मसम्बन्धी जानकारी राख्न खोज्नेहरूका लागि केही हदसम्म मद्दत पुग्ने विश्वास लिएका छौँ ।*

भयानक, डरलाग्दा र रहस्यपूर्ण प्रकृतिका स्वरूपहरूलाई निजी वा सामुहिक कल्याणका लागि आस्थावान् हुने, भक्त हुने, उपासना गर्ने र बलि दिने मनोविज्ञान प्राचीनकालदेखि नै चलिआएको हो । यसै मनोविज्ञानअन्तर्गत प्राचीन आर्यहरूले भयङ्कर प्रकृति र उग्रशक्ति भएका स्वर्गदेखि मर्त्यसम्म गर्जना गर्दै हिँड्ने 'रुद्र'लाई प्रार्थना, स्तुति र बलिद्वारा प्रसन्न गर्ने परम्पराको थालनी गरे । यस परम्पराद्वारा नै समाजमा 'रुद्र', 'शिव' मतको उत्पत्तिको बीज रोपियो । यस अर्थमा शिव या रुद्रका विभिन्न रूपलाई केन्द्र मानेर पूजा, उपासना र भक्ति आदि गर्ने प्रथाको जन्म र विकास शुरु भएदेखि शैवधर्मको उत्पत्ति र विकासको इतिहास पनि शुरु हुन्छ । वैदिकयुगमा शैवधर्मका आराध्य देवता 'शिव' नभएर शिवको आद्यरूप 'रुद्र' थिए । शिव शब्द वास्तवमा उत्तर वैदिककालीन मात्र हो । यस अर्थमा शैवधर्मको इतिहासको विकास रुद्रबाट शुरु भएर 'शिव'सम्म पुग्दछ । तर शैवधर्मको प्राचीनताको खोजीका लागि प्रागऐतिहासिककालसम्म पुग्नुपर्ने हुन्छ । नवपाषाणयुगका अनेक जातिहरूमा खेतको उर्वराको लागि 'लिङ्ग' पूजाको प्रचलन भइसकेको कुरा प्रमाणित भइसकेको छ । भारतको 'गुडिमल्लम' र 'भिटा'बाट पनि मनुष्यका आकृतिमा निर्मित लिङ्गहरू प्राप्त भएका छन् । यसबाहेक

***ऋग्वेदपछि अथर्ववेदकालीन युगमा रूद्र वा शिवसम्बन्धी उपासनाको धारणा अझ विकसित भएको पाइन्छ । यस युगमा रूद्रका अन्य नामहरू थपिनुका साथै उनलाई सर्वोच्च स्थान दिएको देखिन्छ । यस युगमा "भव" र "शर्व" २ अन्य नामहरू पाइन्छन् जो पछि गएर शिव वा रूद्रवाचक मानिएका छन् ।***

सिन्धुसभ्यताको उत्खननमा प्राप्त मोहरहरूमा जटाधारी मानवाकार ध्यानमुद्रा एवं समाधिस्थ चित्रहरू अङ्कित छन् जसलाई 'पशुपति' मानिन्छ । मोहरहरूमा लिङ्गको चित्र पनि अङ्कित छ । त्यसै मोहरमा अङ्कित पशुपतिका वरिपरि बाघ, हात्ती आदिजस्ता पशुहरू पनि बसेका देखिन्छन् । सिन्धुको उत्खननबाटै प्राप्त एक ताम्रपत्रमा एउटा यात्रीको चित्र छ जसले गलामा सर्पको माला लगाएको छ र उसको अगाडि २ वटा सर्पहरू रहेका छन् । यसबाहेक उत्खननमा अनेकौं लिङ्गका प्रकृतिहरू पनि फेला परेका छन् । यी सम्पूर्ण

**यसरी अथर्ववेदमा रूद्रका यी सबै रूपलाई विभिन्न दिशाका प्रतीक या रक्षक र विशेषगरी ईशानलाई सम्पूर्ण अन्तरिक्ष प्रदेशको रक्षक मानेको छ । साथै रूद्रलाई आकाश र अन्तरिक्षसमेत आफ्नो अधीनमा राख्ने, मान्छे, गाई, घोडा, बाख्रा र भेंडा गरी ५ प्रकारका पशुहरूको स्वामी "पशुपति" भनिएको छ ।**

---

प्रमाणहरूले शैवधर्मको प्राचीनतम् उपस्थितिलाई प्रमाणित गर्दछन् ।

ऋग्वैदिकयुगमा रुद्र आफ्नो कठोरता र उद्दण्डताका लागि ख्याति प्राप्त देवता मानिन्छन् । यस युगमा रुद्रको विध्वंसकारी शक्तिदेखि जोगिन ऋग्वैदिक आर्यहरूले रुद्रको स्तुति र वन्दना शुरु गरेको देखिन्छ। ऋग्वेदमा रुद्रलाई प्रार्थनामा आफ्नो डरलाग्दा आयुधलाई पर राखेर दुईपद र चतुष्पदहरूको रक्षा गरिदिन, केटाकेटीहरूलाई रोगी नबनाउनरगाउँलेहरूलाई रोगी नबनाइदिन आह्वान गरिएको पाइन्छ । रुद्रको क्रोधले रोगव्याधि र महामारीहरू आउँछन् भन्ने विश्वास ऋग्वैदिक आर्यहरूको पाइन्छ । ऋग्वेदमा रुद्रलाई 'पशुप' भन्ने उपाधि दिइएको छ । ऋग्वेदमा नै आफ्नो शक्तिले दिव्य र पार्थिव पदार्थहरूलाई देख्न सक्ने, आफ्नो प्रतापले रोगहरू निको पार्न सक्ने, हजारौं प्रकारका औषधी र जडीबुटीहरू जान्ने कविराज मानिएको पाइन्छ । यस अस्तित्वमा रुद्र ऋग्वेदमा तिरस्कृत र मानवभक्षीको रूपमा देखा पर्दछन् । ऋग्वेदमा कतिपय प्रसङ्गमा उनलाई चोर, डाकू, यक्ष, गन्धर्व, किन्नरको देवताको रूपमा र स्वर्गलाई उछिन्ने दुष्टको रूपमा पनि चित्रित गरिएको पाइन्छ । उनलाई पर्वतमा वास भएका, उराठिला मैदान, घनघोर जङ्गल, एकान्त बाटाहरू र निर्जन स्थानतिर घुमी हिँड्ने 'निषाद', 'दस्यू', 'तस्कर', 'भिल्ल'का देवताको रूपमा चित्रित गरिएको पाइन्छ । यसप्रकार ऋग्वेदमा रुद्रको दोहोरो अस्तित्व देखा पर्दछ । एउटा पशुपति कविराज आदिको रूपमा रहेको अस्तित्व जसमा उनलाई स्तुति र प्रार्थना गरिएको छ भने अर्को भयानक अस्तित्व जसमा उनलाई तिरस्कृत गरिएको छ । ऋग्वेदका प्रसङ्गहरूले के कुरा सङ्केत गर्दछन् भने शुरुमा रुद्र 'अनार्य' देवता भएको कारणले तिरस्कृत थिए होलान् तर कालान्तरमा उनको शक्ति र भयानकताको कारणले आर्यहरूले आफ्नो सुरक्षा र समुन्नतिका निमित्त बिस्तारै रुद्रको प्रार्थना र स्तुति गर्न शुरु गरेको हुनसक्छ। ऋग्वेदका ३ वटा सूक्तहरूमा रुद्रको चर्चा पाइन्छ र ७५ पटक जति उनको नाम ऋग्वेदमा आएको छ । ऋग्वेदमा उनलाई भगवान् पुषानजस्तै कपाल भएका, सुन्दर ओठ भएका, बलिया हात, पाखुरा भएका, खैरा रङका स्वर्गका असुरको रूपमा चित्रण गरिएको छ ।

ऋग्वेदपछि अथर्ववेदकालीन युगमा रुद्र वा शिवसम्बन्धी उपासनाको धारणा अझ विकसित भएको पाइन्छ। यस युगमा रुद्रका अन्य नामहरू थपिनुका साथै उनलाई सर्वोच्च स्थान दिएको देखिन्छ। यस युगमा 'भव' र

'शर्व' २ अन्य नामहरू पाइन्छन् जो पछि गएर शिव वा रुद्रवाचक मानिएका छन् । 'भव' र 'शर्व'लाई 'द्विपद' र 'चतुष्पद'का स्वामी धनुर्धरहरूमा श्रेष्ठ, हजार आँखा भएका देव र नर कुनै पनि उनको आघातबाट बच्न नसक्ने र वज्र आयुध बोकी हिँड्ने देवताको रूपमा चित्रित गरिएको छ । यसैगरी 'रुद्र' अग्निमा छन्, जलमा छन्, औषधी र वनस्पतिमा छन् र सम्पूर्ण भूत उनैबाट सृजित भएको भनिएको छ ।

अथर्ववेदमा नै उनलाई पहिलोपटक 'महादेव' नामले सम्बोधन गरिएको छ भने यसै वेदमा उनका ७ वटा नामको वर्णन पाइन्छ जसमा (१) भव (२) सर्व (३) पशुपति (४) उग्र (५) रुद्र (६) महादेव (७) ईशान पर्दछन् । यसरी अथर्ववेदमा रुद्रका यी सबै रूपलाई विभिन्न दिशाका प्रतीक या रक्षक र विशेष गरी ईशानलाई सम्पूर्ण अन्तरिक्ष प्रदेशको रक्षक मानेको छ । साथै रुद्रलाई आकाश र अन्तरिक्षसमेत आफ्नो अधीनमा राख्ने, मान्छे, गाई, घोडा, बाखा र भेंडा गरी ५ प्रकारका पशुहरूको स्वामी 'पशुपति' भनिएको छ ।

सतपथ र कौशितकीब्राह्मणअनुसार रुद्र उषाका पुत्र थिए । यस युगमा आएर उनका ७ वटा नाममा वज्र (या असनी) नाम थपिएर ८ नाम हुन पुगे जसमध्ये रुद्र, सर्व, उग्र र असनीलाई विनाशकारीरूपमा र अन्य भव, पशुपति, महादेव, ईशानलाई कल्याणकारी र अभयदानीरूपमा उपासना गर्न लागियो । तर ब्राह्मणसाहित्यको युगसम्म शिव बिस्तारै कल्याणकारी देवताको रूपमा देखा पर्दछन् । पछिल्लो ब्राह्मणग्रन्थहरूमा हर, मृड, शिव र शंकर नाम थपिएका छन् । गृहसूत्रहरूमा शिवको उग्ररूपको शान्तिको निमित्त सम्पादन गरिने सुलगभ नामक यज्ञको उल्लेख छ । परासर गृहसूत्रले अनकंटार बाटोमा हिँड्दा, चौबाटोमा पुग्दा, खोला, नदी पार गर्दा, जहाजमा यात्रा गर्दा, पहाड चढ्दा, जङ्गल पस्दा, मसानमा पुग्दा रुद्रको वन्दना गर्नुपर्ने कुरा बताएको छ ।

जय गुरुदेव !

**यदि गुरुमा पूर्णरुपमा श्रद्धा एवं समर्पण छ भने शिष्यलाई सफलता प्रदान गर्न गुरु बाध्य हुन्छन् । यसपछि शिष्य कुनै पनि अवस्थामा असफल हुन सक्दैन किनकि गुरु स्वयंले उसको सफलताको उत्तरदायित्व आफूमाथि लिन्छन् ।**

–परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमाली

# महाशिवरात्रि

*लिङ्गपुराणमा 'फाल्गुण कृष्ण त्रयोदशीको दिन शुद्ध मनले स्नान गरी दिनभर निराहार बसी रातभर जाग्राम बसेर चतुर्दशीको दिनमा श्री महादेवको दर्शन गर्नेहरुले सर्वकार्यमा लाभ, सिद्धि प्राप्त गर्दछन्' भन्ने श्री महादेवको वचन भनेर उल्लेख भएको पाइन्छ । भारतीय व्रतोत्सव भन्ने धार्मिक पुस्तकमा पनि श्री शिवजीले श्री पार्वतीलाई यस फाल्गुण महिनाको चतुर्दशीको व्रत सबैभन्दा ठूलो र फलदायक हो भन्ने सुनाएको कुरा वयान गर्नुभएको छ । शिवरात्रीको समयमा शुद्ध मनले श्री शिवजीको व्रत बसी रातभर जाग्राम बस्नेहरु शिवलोक गएर मुक्त हुन पाउने कुरा पनि यही पुस्तकमा उल्लेख भएको छ ।*

यस दिन रात्री बेला ब्रह्मा, विष्णु, महेश्वर र धर्मराज इन्द्रको प्रवेश भई श्री शिवजी अर्थात् भगवान् पशुपतिनाथ उत्पत्ति भएको दिन हुनाले यस दिनको नाम नै शिवरात्री रहन गएको मानिन्छ ।

शिवरात्री फाल्गुण महिना कृष्णपक्षको चतुर्दशीका दिन पर्दछ । रुद्रतन्त्रको आधारमा माघ महिनामा श्री शिवजीले संसारलाई रुदाइ रूख झारपात सुकाइदिनु भएकोमा यसै समयदेखि फेरि झारपात र रूखहरूका कोपिला उत्पत्ति गराई फेरि नयाँ युगमा परिवर्तन गरिदिएको समय हो । यो पर्वको दिन शुरु हुनासाथ स्नानादि गरेर शुद्ध शरीर र शुद्ध मन गरी नेपाल अधिराज्यभरिका महादेवका मन्दिरहरूमा श्रद्धा, भक्तिका साथ दर्शन गर्न जान्छन् र प्रहरप्रहरमा पूजा, ध्यान, जपतप, पाठ, भजनकीर्तन, नाचगान गर्छन् । यस दिन देउपाटनस्थित पशुपतिनाथको मन्दिरमा ठूलो मेला लाग्छ । यस दिन नेपालका विभिन्न ठाउँहरू र भारतबाट समेत यहाँ दर्शन गर्न आउँछन् र महाद्वीप, अखण्डद्वीप, लक्षद्वीप

बाली रातभर जागा भई नाचगान गर्छन्, महादेवलाई धतुरो, बेलपत्र चढाउँछन् । यसै रात नेपाल उपत्यकाका धेरैजसो महादेवका मन्दिरहरूमा अहोरात्र आगो बाली भजनकीर्तन गर्छन् । केटाकेटीहरू घरघरमा गई 'महादेवलाई जाडो भयो, आगो बाल्न दाउरा देऊ' भन्दै मागेर हिँड्छन् । बूढापाकाहरूले दाउरा माग्न हिँडेकाहरूलाई मकै, भटमास, बदाम र हलुवापुरी तयार गरेर खुवाउँछन् र रातभर जागा भएर बस्दछन्। पशुपतिनाथको दर्शन गर्न आउने यात्रुहरूलाई ५/७ दिन अघिदेखि नै सेवा गर्न गराउन पाटीपौवा, धर्मशालामा यात्रुहरूको बस्ने खाने व्यवस्था मिलाइन्छ ।

लिङ्गपुराणमा 'फाल्गुण कृष्ण त्रयोदशीको दिन शुद्ध मनले स्नान गरी दिनभर निराहार बसी रातभर जाग्राम बसेर चतुर्दशीको दिनमा श्री महादेवको दर्शन गर्नेहरूले सर्वकार्यमा लाभ, सिद्धि प्राप्त गर्दछन्' भन्ने श्री महादेवको वचन भनेर उल्लेख भएको पाइन्छ । भारतीय व्रतोत्सव भन्ने धार्मिक पुस्तकमा पनि श्री शिवजीले श्री पार्वतीलाई यस फाल्गुण महिनाको चतुर्दशीको व्रत सबैभन्दा ठूलो र फलदायक हो भन्ने सुनाएको कुरा वयान गर्नुभएको छ । शिवरात्रीको समयमा शुद्ध मनले श्री शिवजीको व्रत बसी रातभर जाग्राम बस्नेहरू शिवलोक गएर मुक्त हुन पाउने कुरा पनि यही पुस्तकमा उल्लेख भएको छ । यही धार्मिक आधारमा तान्त्रिकहरू यस दिनलाई बडो महत्त्वपूर्ण र ठूलो सम्झन्छन् । यिनीहरूले 'सिल्हाचह्रे' पूजा भनी महादेव र पार्वतीको भक्तिभाव र श्रद्धापूर्वक विधि-विधानअनुसार पूजाआजा गर्दछन् ।

शिवरात्री विषयमा एउटा किंवदन्ती यस्तो छ–

एकपटक फाल्गुण कृष्ण त्रयोदशीको दिन एउटा व्याधा जङ्गलमा शिकार खेल्न गएको थियो । त्यसले त्यहाँ एउटा बघिनी (कुनै कुनै पुस्तकमा मृगिणी भनी उल्लेख भएको पनि पाइन्छ) लाई देख्यो र तुरुन्त आफ्नो धनुष उठाई बघिनीलाई मार्न तम्स्यो । त्यसैबेला बघिनीले त्यस व्याधासँग 'मलाई अहिले नमार। यदि मलाई मार्ने नै हो भने भोलि मार्नू, अहिले भोकले मेरा बच्चाहरू मर्न लागिरहेछन् । म उनीहरूलाई आहारा बन्दोबस्त गरेर आफैँ हाजिर हुन आउनेछु। त्यसबेला जे इच्छा हुन्छ, गर्नू। यसमा म बेइमान गर्ने छैन' भनी साह्रै अनुरोध गरिन् । व्याधालाई बघिनीप्रति दया लाग्यो र उसले बघिनीलाई छोडिदियो । त्यस दिन त्यस व्याधाले अरू कुनै शिकार भेट्टाउन सकेन र ऊ त्यही जङ्गलमा नै बास बस्यो। संयोगले ऊ शिवलिङ्ग भएको बेलपत्रको रूखमुनि बस्न पुगेछ । ऊ ज्यादै भोको भएकोले निदाउन पनि सकेनछ । ऊ 'शिव-शिव' भन्दै रातभर जागा भइरहँदा रूखबाट बेलपत्र झरेर शिवलिङ्गमा पऱ्यो । त्यसपछि व्याधादेखि खुसी भएर महादेव प्रकट भई 'वर माग' भनी आज्ञा हुँदा व्याधाले 'हजुरसँगै सँधै बसी मोक्ष प्राप्त गर्न सकूँ' भन्ने वर माग्यो । यो सुनी 'केही वर्षमा तिम्रो ईच्छा पूर्ण हुनेछ' भनी श्री महादेव अन्तर्ध्यान हुनुभयो । भोलिपल्ट बिहान आफ्नो बच्चाहरूलाई आहाराको बन्दोबस्त मिलाई बघिनी व्याधा बसेको ठाउँमा आई 'आफूले गरेको कबोल पूरा गर्न आएको, अब जे ईच्छा लाग्छ गर' भनी । त्यसबेला व्याधाले आफ्नो पहिलेको पाप सबै मोचन गरी मन परिवर्तन भएर धार्मिक भावना जमाइसकेको हुँदा 'अब उप्रान्त शिकार गर्ने प्रवृत्ति लिने छैन, कसैको ज्यान मार्ने छैन' भनी प्रतिज्ञा गरी ती बघिनीलाई फर्काइदियो । बघिनी पनि खुसी हुँदै आफ्नो बच्चा कहाँ आइन् ।

शिवरात्रीको समय भगवान् शिव प्रकट हुनुभएको र व्याधाले पनि शिकार गर्न छोडी धार्मिक प्रवृत्तिमा लागेर मोक्ष प्राप्त गरेकोले शिवरात्रीलाई धार्मिक दृष्टिकोणमा निकै महत्त्वपूर्ण मानिएको छ ।

जय गुरुदेव !

*जब शिष्यले पूर्ण समर्पण गर्दछ, ऊ गुरुसित एकाकार हुन जान्छ तथा गुरुका समस्त शक्तिहरु उसलाई माथि उठाउन प्रयत्नशील हुन्छन् ।*

*यो शिष्यको धर्म हो कि उसले जीवनको अन्तिम क्षणसम्म सचेष्ट, चौबीसै घण्टा, प्रत्येक क्षण गुरु सेवामा व्यतीत गरोस् । यस्तो जीवन जिउनाले कुनै पनि प्रकारको साधनामा पूर्णता प्राप्त हुन सक्छ, उसलाई उच्च दीक्षा प्राप्त हुन सक्छ ।*

**–परमपूज्य सद्‌गुरुदेव**
**डा. नारायण दत्त श्रीमाली**

विशेष रिपोर्ट

# राष्ट्रिय अभिनन्दन र अन्तर्राष्ट्रिय साधना शिविरको ऐतिहासिक क्षण

पूजनीय गुरुमाताको नेपाल आगमनको तयारीमा सिद्धाश्रम शक्ति केन्द्र केही समयदेखि लागिरहेको थियो। पहिलोपटक यस्तो अन्तर्राष्ट्रिय स्तरको साधना शिविर एवं पूजनीय गुरुमाताको राष्ट्रिय अभिनन्दनको तयारी आफैंमा चुनौतीपूर्ण थियो। अनेकौं बाधाविरोध, अप्ठ्याराहरुलाई पार गर्दै सिद्धाश्रम शक्ति केन्द्रले आफ्नो तयारीलाई अगाडि बढाइरहेको थियो। विभिन्न समिति, उपसमितिहरुको गठन, तिनीहरुको बेला बेलाको बैठक, छलफलले शिविर नजिकिएको भान हुन्थ्यो। बजारलगायतका ठाउँहरुमा देखिने पर्चा, पम्प्लेट आदिले पनि शिविर हुने तयारीका संकेतहरु दिइरहेको अनुभव हुन्थ्यो। यसरी दिन गन्दागन्दै शिविरको तयारीमा पाल लगाउने बेला आइसकेको थियो। पूजनीय गुरुमाता, अरविन्द गुरुदेवको स्वागतको तयारी गर्न भिआइपी पास मिलाई एयरपोर्ट जाने दिन आइसकेको थियो। यसरी दिन गन्दागन्दै माता आउने दिन आइपुग्यो।

माघ २१ गते तदनुसार फरवरी ४ को शुक्रबार हतार हतार तयारी गरी स्वागतको लागि साढे दुई बजेतिर एयरपोर्ट पुगियो। हतारमा स्वागतमा अरविन्द गुरुदेवलाई लगाइदिने नेपाली टोपी नै छुटेछ। फेरि हतार हतार किनेर ल्याउन पठाइयो। स्वागतका लागि एउटै ड्रेस, साडीमा सजिएर सिद्धाश्रम शक्ति केन्द्रका साधिकाहरु लामबद्ध थिए। त्यस्तै भक्तपुर ठिमीका कार्यकर्ताहरु पनि आफ्नै मौलिक पोशाकमा सजिएर आएका थिए। त्यस्तै विद्याश्रमबाट सजिसजाउ गराई ल्याइएका पञ्चकन्या पनि हातमा फूलका गुच्छा लिई स्वागतको तयारीमा जुटेका थिए। यसरी सबैजना हातमा पुष्पगुच्छा, मालाहरु लिई बाजागाजासहित स्वागतको तयारीमा प्रतीक्षारत थिए। आश्रमको प्रतिनिधित्व गर्दै माला, पुष्पगुच्छा, टोपी, सल आदिका साथ हामीले पनि भिआइपी कक्षमा गई प्रतीक्षा गर्‍यौं। हवाइजहाज ल्याण्ड भइसक्यो भन्ने खबर आयो। हामी ढोकामा बसेर वर्षौंदेखि नेपाल आउने प्रतीक्षाको साकार प्रतिमूर्तिको रुपमा पूजनीय गुरुमातालाई साक्षात् अगाडि प्राप्त गरी सारा नेपाली साधकसाधिकाहरुको तर्फबाट स्वागत गर्न व्याकुल थियौं। शारीरिक कारणले गर्दा मातालाई व्हीलचेयरमा बसाएर एयरपोर्टका कर्मचारी साधकले लिएर आए। प्रतीक्षाको क्षण समाप्त भयो। पहिला पुष्पगुच्छा हातमा लिएर स्वागत गरी दर्शन गर्‍यौं। त्यसपछि भिआइपी कक्षमा अरविन्द गुरुदेवलाई बसाएर टोपी, माला

र मातालाई माला, सल ओढ्याएर स्वागतका साथ हामीभित्रको श्रद्धा, भक्ति, भावनालाई चढायौँ। अत्यन्त प्रसन्न मुद्रामा माता, अरविन्द गुरुदेवलाई प्राप्त गर्दा हामी अति हर्षित भयौँ। हाम्रो चाहनानुरुप नेपाल शिविर एवं अभिनन्दनको लागि उहाँहरुको आगमनले हामी सम्पूर्णमा खुशीयाली छायो। हामी अत्यन्तै हर्षित भयौँ।

केहीबेर फोटो खिच्यौ, शिविरको तयारीको बारेमा सामान्य जानकारी दिएपछि उहाँहरुको सुटकेश, व्यागहरु त्यहीँकै कर्मचारीलाई जिम्मा लगाई बिस्तारै भिआइपी कक्षबाट तल झर्‍यौँ। अगाडि पञ्चकन्या स्वागतका लागि थिए। उनीहरुले माता र अरविन्द गुरुदेवलाई स्वागत गरे। त्यसपछि स्वागतमा बस्ने अन्यले फूलमालाले स्वागत गरे। साथमा बाजागाजाका साथ स्वागत गर्दै माताहरुका लागि भनेर तयार पारिएको सजिसजाउ गाडीमा चढायौँ। हामी पनि गुरुदेवको गाडीमा चढी एयरपोर्टबाट बिस्तारै अगाडि बढ्यौँ। एयरपोर्टको गेटनजिकै ठाउँ ठाउँमा स्वागतका लागि बसेका साधकसाधिकाहरुले फूलमाला दिएर स्वागत गरेका थिए। स्कर्टिङ्गका लागि गाडी र मोटरसाइकलहरु आश्रमका झण्डा राखी अगाडि पछाडि लामबद्ध थिए। यसरी पूरै जुलुस जसरी गाडीहरु राखेर, मोटरसाइकलहरु, गुरु च्यादर ओडेर जुलुसमा हिँड्दा साँच्चिकै शोभायात्राको भान हुन्थ्यो। अरविन्द गुरुदेव हाम्रो भावपूर्ण स्वागतबाट प्रसन्न हुनुभएको कुरा बेला बेलामा उहाँले दिनुभएको अभिव्यक्तिले प्रष्ट्याएका थिए। अत्यन्त खुसी हुँदै उहाँले भन्नुभयो, 'शोभायात्रा आजैजस्तो छ, होइन ?' 'गुरुदेव ! शोभायात्रा त भोलि हो' हामीले भन्यौँ। 'त्यसो भए यो के  टेलर हो?' उहाँले खुसी व्यक्त गर्नुभयो। बाटाभरि पहेँला सलमा साधकसाधिकाहरु मोटरसाइकल, गाडीहरुमा थिए। बिस्तारै गौशाला, चाबहिल हुँदै ह्यात होटल पुग्यौँ। होटेलमा स्वागतको तयारीमा एउटा ठूलै समूह थियो। होटेल पुग्दा ठूलै भीड जम्मा भइसकेको रहेछ। रिसेप्सनमा उहाँहरुलाई राखी पूजन, आरती गर्‍यौँ। भीड अझै ठूलो भयो। साततारे होटेलमा ठूलो भीड जम्मा भएकोले होटेलका सुरक्षाकर्मीहरु मानिसहरुलाई बाहिर जान आग्रह गर्दै थिए। यसरी मातालाई नेपालमा हार्दिक स्वागत गर्दै पूजन, आरतीका साथ भक्तिभाव प्रकट गर्‍यौँ। त्यसपछि माताहरु माथि रहेको विशेष कक्षतिर लाग्नुभयो। अन्य भक्तजन, साधकसाधिकाहरु आ-आफ्ना कार्यतिर लागे। एकछिनको विश्रामपछि माता र अरविन्द गुरुदेवलाई प्रसादको व्यवस्था गर्‍यौँ। उहाँहरुलाई कार्यक्रमको जानकारी सामान्यरुपमा दिई केही क्षणमा आयोजक समितिसँग उहाँहरुको भेटघाटको लागि समय माग्यौँ। उहाँहरुले ९:०० बजे आउनू भन्नुभयो। त्यसपछि शिविरस्थलको निरीक्षण गर्‍यौँ, त्यसैअनुरुप दस, बाह्र जना भेट्न गयौँ। करिव ९:०० बजेतिर गुरुदेवलाई भेटी भोलिपल्ट (माघ २२ गते) को कार्यक्रम शोभायात्राको बारेमा

जानकारी गरायौं। शोभायात्रामा हात्तीमा राखेर सवारी गराउने जानकारी गराउँदै मातालाई हात्तीको पूजा गरी गाडीमा बसेर केही बेर शोभायात्रामा सरीक हुन प्रार्थना गर्‍यौं। उहाँहरुले सहमति जनाउनुभयो। माघ २२ गतेको सम्माननीय उपराष्ट्रपतिबाट हुने अभिनन्दन कार्यक्रमको तालिका देखाइयो। यसरी सम्पूर्ण कार्यक्रमको बारेमा चर्चा गर्‍यौं र भोलिको शोभायात्रामा जानका लागि आउने तयारी गरी त्यहाँबाट निस्कियौं। शिविर स्थलमा आई केही क्षण हेरी घरतर्फ लाग्यौं।

अर्को दिन माघ २२ गते शिविरस्थलमा गुरु पूजन, गणेश पूजन गरी शिविरका लागि विभिन्न देवीदेवताको आवाहन पूजन गर्‍यौं। अरु साधकसाधिकाहरु शोभायात्राको तयारीमा वसन्तपुरको काष्ठमण्डपमा थिए। हामी पूजा सकी माता एवं अरविन्द गुरुदेवलाई लिन होटेल जाने तयारीमा लाग्यौं। मातालाई अलि सन्चो छैन, शोभायात्रामा नजाने भनेर सुत्नुभएको छ भनेर होटेलबाट फोन आयो । काष्ठमण्डपमा पनि माता नआउने हल्ला चलेछ। हामीलाई कता कता खल्लो लाग्यो। हतार हतार होटेलमा पुग्यौं। माताको कोठामा पुग्दा माता सुतिरहनु भएको थियो। माताबाट पूजाआजा गरी शोभायात्राको उद्घाटन गर्ने हाम्रो तयारीमा एक्कासी झट्का लाग्यो। जगत्जननी माताको लीलाभित्र हराएका हामी उहाँकै लीलामा पर्‍यौं। शायद हाम्रो परीक्षा लिनुभएको हो वा हाम्रो भावनालाई जाँच गर्नुभएको हो, हामी अलि असहज स्थितिको सामना गर्न बाध्य थियौं। तर पनि हामीले हिम्मत हारेनौं। अरविन्द गुरुदेवसँग गएर प्रार्थना, आग्रह, निवेदन गर्नुबाहेक अरु उपायहरु पनि केही थिएन। सूक्ष्मतामा विराजमान सद्गुरुदेवहरुसँग प्रार्थना गर्दै, उहाँहरुबाट कृपाको आशा राख्दै धैर्यलाई आत्मसात गर्‍यौं। अरविन्द गुरुदेवसँग काष्ठमण्डपमा हजारौं साधकसाधिकाहरु प्रतीक्षारत छन्, पाँच मिनेटलाई मात्रै भए पनि शोभायात्रामा मातालाई लैजाने आग्रह गर्‍यौं। अरविन्द गुरुदेवले पनि 'ठीक छ, म आफैं गएर भन्छु' भनेर आश्वासन दिनुभयो। उहाँले शोभायात्राको तयारीका बारेमा पनि सोध्नुभयो। सबै तयारी भइसकेको जानकारी दियौं र अरविन्द गुरुदेव निस्केर माताको कोठामा लाग्नुभयो। हामी पनि साथसाथै माताको कोठामा गयौं। अरविन्द गुरुदेवले हाम्रो भावना बुझेर मातालाई शोभायात्रामा जान अनुरोध गर्नुभयो। हामीले पनि सही थप्यौं। धेरै बेर बस्न नसक्ने भए गाडीमा बसेर कार्यक्रम शुरुवात गरी गाडीमै फर्कने भनेर बिन्ती बिसायौं। हामीलाई गुरुकृपा भयो। हाम्रो भावनालाई बुझेर होला साथै सूक्ष्मसत्तामा विराजमान सद्गुरुदेवहरुको कृपास्वरुप परिस्थितिले एकाएक नयाँ मोड लियो, अकल्पनीय गुरुकृपा भयो।

दोस्रो दिन माताजीको अभिनन्दन पश्चात् आनन्दले भरिपूर्ण हुनुभई नृत्य गर्नुहुँदै अरविन्द गुरुदेव

गुरुमाता शोभायात्रामा जान तयार हुनुभएपछि एकाएक हामी सबैमा खुसीको लहर छायो। उत्साह, उमङ्गका साथ पूजनीय गुरुमाता र अरविन्द गुरुदेवलाई साथमा लिई शोभायात्राको लागि वसन्तपुरतर्फ लागियो। हजारौं साधकसाधिकाहरु शोभायात्राको लागि तम्तयार थिए। माताको आगमनले सबैमा जोश, जाँगर थपियो, उत्साह थपियो। माता गाडीमा बसेर शोभायात्राको लागि बसन्तपुर जाँदाजाँदै एकाएक उहाँको स्वास्थ्यमा असोचनीय परिवर्तन भयो। हामीले माता एवं अरविन्द गुरुदेवलाई लिएर सबैभन्दा पहिला श्री श्री महायोगी गुरु गोरखनाथको दिव्य शक्तिपीठमा पूजन गर्न काष्ठमण्डपभित्र लग्यौं। माताको हातबाट श्री श्री महायोगी गुरु गोरखनाथको पूजन सम्पन्न भयो। पूजनपछि आफ्नो सुपुत्रलाई गुरु गोरखनाथको फूल प्रसाद लगाइदिनु भयो। दुवैजनाले श्री श्री महायोगी गुरु गोरखनाथको पूजन गरी शोभायात्राको शुरुवात गर्नु आफैंमा सबैका लागि हर्ष र गर्वको विषय बन्नपुग्यो, सिद्धाश्रम शक्ति केन्द्रको लागि त ठूलो उपलब्धि नै रह्यो। आफ्ना परमाराध्य सद्‌गुरुदेवहरुलाई उतिकै स्थान, श्रद्धा, भक्ति दिँदै आएको यस केन्द्रलाई गुरु गोरखनाथको पूजा त्यो पनि स्वयं गुरुमाताले गर्नु उहाँले हामी सम्पूर्ण शिष्यहरुको भावना बुझेजस्तो लाग्यो। यसरी गुरु गोरखनाथको शक्तिपीठको पूजनपछि हात्तीको पूजन भयो। हात्तीलाई माताले प्रसाद दिनुभयो। त्यसपछि माता गाडीमा बस्नुभयो। अरविन्द गुरुदेवलाई हात्तीमा चढ्नुभयो। मातालाई गाडीमा र अरविन्द गुरुदेवलाई हात्तीमा राखी भव्य एवं दिव्यताका साथ बाजागाजा, विभिन्न भेषभूषामा सजिएका हजारौं साधकसाधिकाका साथ शोभायात्रा अगाडि बढ्यो। माता केही बेर अष्टमातृका नृत्य, सुपुत्र अरविन्दको हात्तीमाथिको सवारी, साधकसाधिकाको भीडलाई नियाल्दै अगाडि होटेलतर्फ विश्रामको लागि लाग्नुभयो। हामी भजनकीर्तन, जयकार गर्दै शोभायात्रामा सहभागी हुँदै महोत्सव मनाउँदै अगाडि बढ्यौं। वसन्तपुर, न्यूरोड, जमल, कमलादी, कमलपोखरी, ज्ञानेश्वरपुल, गौशाला हुँदै शिविरस्थल वनकाली पुग्यौं। वनकाली पुगेपछि एकछिनको आरामपछि अरविन्द गुरुदेव शिविरस्थलको सजिसजाउ स्टेजमा आउनुभयो। त्यहाँ पनि उहाँको भव्य स्वागत भयो। आयोजक समितिको तर्फबाट माल्यार्पण गर्ने क्रम केहीसमय चल्यो। आवाहन भजनको समयमा

परमपूज्य सद्‌गुरुदेवको समुपस्थितिको आभाष धेरैलाई भयो। केही बेरमा अरविन्द गुरुदेवले प्रवचन दिनुभयो। स्वागत भजन, स्वागत नृत्यपछि उहाँलाई भेटेर आफ्नो समस्या राख्ने कार्यक्रम चल्यो। लाममा बसेका सबैले उहाँको दर्शन गरे, आफ्ना समस्या लेखेर दिए। समस्याअनुसारको शक्तिपातको लागि चिट लेख्दै पठाउने क्रम राति अबेरसम्मै चल्यो। त्यसपछि करिब ८ बजेपछि फेरि शक्तिपातको लागि चिट ल्याउनेहरुको लाम बस्यो। यो क्रम नसकिँदासम्म शक्तिपात चलिरह्यो र अन्तमा ९:३० तिर आरती गरी उक्त दिनको कार्यक्रम विसर्जन भयो। राति होटेलमा भेटेर भोलिको कार्यक्रम तय गरियो। सम्माननीय उपराष्ट्रपति आउनुहुने भएकोले औपचारिक कार्यक्रमका लागि स्टेजमा संस्थाको तर्फबाट आयोजक पनि कुर्सीमा बस्नुपर्ने थियो। अरविन्द गुरुदेवलाई कार्यक्रमको जानकारी दिई स्टेजमा उहाँहरुसँगै बस्ने अनुमति लियौं र भोलिको तयारीमा जुट्यौं।

अर्को दिन माघ २३ गते आफैंमा सबैका लागि एउटा विशिष्ट दिन भएको अनुभव भइरहेको थियो किनकि उक्त दिन इतिहासमै पहिलोपटक पूजनीय गुरुमाताबाट गुरुमन्त्र सुन्ने विशेष कार्यक्रम थियो भने अर्कोतर्फ सारा शिष्यहरुको तर्फबाट र नेपाली जनताको तर्फबाट सम्माननीय उपराष्ट्रपतिले माताजीलाई राष्ट्रिय सम्मान गर्नुहुने ऐतिहासिक कार्यक्रम पनि थियो। बिहानको तयारी सकी शिविरस्थलबाट माता तथा अरविन्द गुरुदेवलाई लिन होटेल गयौं। हतार हतार गरेर करिव ११:०० बजे उहाँहरुलाई शिविरस्थलमा ल्यायौं। केही बेरमा नै गणतन्त्र नेपालका प्रथम उपराष्ट्रपति श्री परमानन्द झा आउनुभयो। पुष्पगुच्छाले उहाँलाई स्वागत गरी स्टेजमा आसन ग्रहण गरायौं। त्यसपछि औपचारिक कार्यक्रम अगाडि बढ्यो। गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका भाइबहिनीहरुले स्वागत नृत्य प्रस्तुत गर्नुभयो। नृत्यपछि आयोजक संस्थाको तर्फबाट आयोजक समितिका अध्यक्षले स्वागत मन्तव्य राख्नुभयो। स्वागतपछि सम्माननीय उपराष्ट्रपतिले सद्‌गुरुदेवहरुको तस्विरमा माल्यार्पण, पानसमा बत्ती बालेर कार्यक्रमको समुद्घाटन गर्नुभयो।

समुद्घाटन पछि सिद्धाश्रम शक्ति केन्द्र आरती सञ्चालन केन्द्र ठिमी, भक्तपुरबाट नेपाली संस्कृति झल्कने तांत्रिक अष्टमातृका नृत्य प्रस्तुत भयो। नृत्यपछि सम्माननीय उपराष्ट्रपतिले *गोरक्ष निखिल वाणी*को विशेषांकको विमोचन गर्नुभयो भने पूजनीय

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमद्वारा प्रस्तुत स्वागत नृत्य

कार्यक्रम स्थलमा हर्ष र उल्लासको वर्षा भइरहेको थियो। सम्पूर्ण साधक साधिकाहरु अत्यन्त खुशी र भावविभोर देखिनुहुन्थ्यो। यो क्षण इतिहासमा नै एक गर्वगर्न लायक घटना बन्न पुग्यो।

गुरुमाताले *अद्वितीय युगपुरुष डा. नारायण दत्त श्रीमाली*नामक ग्रन्थ जुन सद्‌गुरुदेवको जीवनीबारे लेखिएको पहिलो ग्रन्थ हो विमोचन गर्नुभयो।

विमोचन पछि सम्माननीय उपराष्ट्रपतिले विशेषरुपमा तयार पारिएको २१ किलोको पुष्पमाला पूजनीय गुरुमातालाई लगाइदिनुभयो। माल्यार्पणको क्रममा माताजी यति धेरै प्रसन्न देखिनुहुन्थ्यो कि त्यस्तो प्रसन्न मुद्रामा उहाँलाई कहिल्यै दखेका थिएनौं। माल्यापर्णको क्रमपछि पूजनीय गुरुमातालाई सम्माननीय उपराष्ट्रपतिले दोसल्ला ओढाएर सम्मान गर्नुभयो।

त्यसपछि त्यो ऐतिहासिक क्षण नजिक आयो। अभिनन्दन-पत्रमा उल्लेख व्यहोरा पढेर सबैलाई सुनाइयो र विधिवत्‌रुपमा सम्माननीय उपराष्ट्रपतिले त्यस अभिनन्दन पत्र पूजनीय गुरुमातालाई हस्तान्तरण गर्नुभयो। पूरा पण्डाल ताली र जयकारले भरियो। वातावरण खुसी, हर्षले पूरै छचल्किएको थियो। पूजनीय गुरुमाताको मुहार हर्षित भई पूर्णचन्द्रजस्तो खुलेको थियो। वातावरण अत्यन्तै आनन्ददायक भयो, सबैमा हर्षको सीमा नै रहेन। त्यसपछि सम्माननीय उपराष्ट्रपतिले पूजनीय गुरुमाता तथा अरविन्द गुरुदेवलाई विशेष उपहार प्रदान गर्नुभयो साथै दोसल्ला ओढाएर अरविन्द गुरुदेवलाई पनि सम्मान गर्नुभयो। त्यसपछि सम्माननीय उपराष्ट्रपतिलाई पूजनीय गुरुमाताले पारद शिवलिंग उपहारस्वरुप प्रदान गर्नुभयो भने अरविन्द गुरुदेवले गुरु च्यादर ओढाई, पुष्पमाला लगाइदिनुभयो।

दिव्यताका साथ भएको यस कार्यक्रम आफैँमा अद्वितीय बन्न सफल भयो।

त्यसपछि अरविन्द गुरुदेवले आशीर्वचनको क्रममा नेपालसम्बन्धी व्याख्या, यहाँका साधकसाधिकाहरुको समर्पण, भावभक्तिको प्रशंसा गर्नुभयो। साथै नेपाली जनता, शिष्यसमुदायको उन्नति प्रगतिको लागि शुभकामना व्यक्त गर्दै सम्माननीय उपराष्ट्रपतिज्यूलाई आशीर्वाद प्रदान गर्नुभयो।

त्यसपछि सम्माननीय उपराष्ट्रपतिज्यूले कार्यक्रमलाई सम्बोधन गर्नुभयो। संवोधनको क्रममा उहाँले परमपूज्य सद्‌गुरुदेवको कार्यको प्रशंसा गर्नुभयो, त्यस्तै पूजनीय गुरुमाताको पनि प्रशंसा गर्नुभयो। माताजीको प्रशंसा गर्दै उहाँले भन्नुभयो 'गुरुमाताज्यूले भर्खरै आफ्नै हातले पिउनका लागि मलाई पानीको गिलास दिनुभयो। त्यसलाई मैले उहाँको आशीर्वाद मानेँ। बडो प्रसन्नचित्तले मैले त्यो पानी पिएँ। त्यो पानी पिएपछि आफूमा धेरै ऊर्जा र शक्ति आएको महसुस गरेँ।' उहाँले पूजनीय गुरुमाताको अभिनन्दन गर्ने सौभाग्य प्रदान

गर्नुभएकोमा आयोजकलाई पनि कृतज्ञता ज्ञापन गर्नुभयो। उपराष्ट्रपतिज्यूले गर्नुभएको प्रशंसाले सबैमा प्रसन्नता छाएको स्पष्ट अनुभव भयो। ताली र खुसीले वातावरण उल्लासमय बन्यो। साह्रै राम्रो र शुरुमै पूर्ण आकर्षक सम्बोधन गरेर उपराष्ट्रपतिज्यूले कार्यक्रमको रौनकतालाई थप्नुभयो।

अन्तमा आयोजक संस्थाको तर्फबाट धन्यवाद ज्ञापनको क्रमसँगै औपचारिकरुपमा कार्यक्रम समापन भयो।

एकैछिनको विश्रामपछि स्टेजमा पूजनीय गुरुमाता र अरविन्द गुरुदेवको पुन: आगमन भयो। माताजी एवं अरविन्द गुरुदेवलाई सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट केन्द्रलगायत सम्पर्क कार्यालयहरुका प्रतिनिधिले पनि फूलमाला, उपहारसहित अभिनन्दन गरे।

त्यसपछि आवाहनभजन भयो। भजनपछि अरविन्द गुरुदेवले मंत्रदीक्षापूर्वका विधिहरु सम्पन्न गराउनुभयो। पूर्वक्रमहरुको समापन पछि पूजनीय गुरुमाताबाट गुरुमन्त्र प्राप्त गर्ने एक अद्वितीय अवसर सम्पन्न भयो। पूजनीय गुरुमाताले अगाडिबाट मन्त्रोच्चारण गरेपछि सबैले पछि पछि उच्चारण गर्ने क्रम तीनपटक सम्म दोहोरियो। यसरी वातावरण पूर्णरुपमा दिव्यतम् बन्यो, चैतन्यमय बन्यो। सारा योगी महायोगीहरुको साक्षात् उपस्थितिजस्तो महसुस भयो। यसरी इतिहासमै पहिलोपल्ट पूजनीय गुरुमाताको मुखारविन्दबाट गुरुमन्त्र प्राप्त गर्ने दिव्य अवसर हजारौं साधकसाधिकाहरुले प्राप्त गरे। यस्तो दिव्य अवसर प्राप्त गरेर सबैले आफूलाई सौभाग्यशाली ठाने र सबैको मुहारमा खुसी र हर्ष छाएको अनुभव हुन्थ्यो।

गुरु मंत्रदीक्षापश्चात् अरविन्द गुरुदेवले अष्टलक्ष्मी साधना सम्पन्न गराउनुभयो। साधनापश्चात् प्रवचनको क्रममा उहाँले कार्यक्रमको र आयोजक संस्थाको धेरै प्रशंसा गर्नुभयो। पूजनीय गुरुमाता सद्‌गुरुदेवको महाप्रयाण पछि विगत १२ वर्षको अवधिमा आज नै यति धेरै खुशी देखिनुभएको कुरा भन्नुभयो। सद्‌गुरुदेवले शरीर छाड्नु भएपश्चात् सबैभन्दा राम्रो शिविर भनी माताजीले प्रशंसा गर्नुभएको कुरा पनि उहाँले भन्नुभयो। माताजी प्रसन्न हुनुभएर त्यस दिनको लागि सम्पूर्ण दीक्षाहरु खुल्ला गरिदिनुभएको

बिदाईको क्रममा एअरपोर्टमा सबैलाई आशीर्वाद प्रदान गर्नुहुँदै

कुरा जानकारी गराउँदै त्यसदिनको लागि दीक्षाशुल्क पनि एकदमै न्यून रहने कुरा भन्नुभयो।

उक्त अवसरमा माताजी प्रसन्न हुनुभएर दस महाविद्याहरुको मंत्र पनि प्राप्त भएको थियो।

प्रवचनको क्रमपछि फेरि भेटघाटको क्रम साँझसम्म चल्यो। त्यसपछि शक्तिपातको लागि लाइनमा बसेकाहरुलाई अरविन्द गुरुदेवले शक्तिपात दिने क्रम चल्यो। शक्तिपातको क्रमपछि आरती सम्पन्न भयो। गुरु आरतीपछि प्रवचनको क्रममा अरविन्द गुरुदेवले कार्यक्रमको, सिद्धाश्रम शक्ति केन्द्रको, केन्द्रका कार्यकर्ताहरुको गुरुप्रतिको भावभक्तिको, अनुशासनको धेरै प्रशंसा गर्नुभयो। प्रवचनपश्चात् उपस्थित सबैलाई चरणस्पर्शको अवसर प्राप्त भयो।

यसरी दुई दिवसीय साधना शिविर भव्य एवं दिव्यरुपमा सम्पन्न भयो।

अर्को दिन माघ २४ गते माताहरु भारत फर्कनु पर्ने थियो। बिहान १०:३० तिर माता र अरविन्द गुरुदेवले आराध्यदेव भगवान् पशुपतिनाथको विशेष पूजन गर्नुभयो। त्यसपछि वर्षौंदेखि हाम्रो प्रतीक्षारत क्षण पूरा हुने क्रम अगाडि बढ्यो अर्थात् पशुपतिपछि उहाँहरुलाई सिद्धाश्रम शक्ति केन्द्रको केन्द्रीय कार्यालय बसुन्धरामा ल्याउने इच्छा पूरा भयो। पूजनीय गुरुमाता र अरविन्द गुरुदेवलाई आरतीकक्षमा राखी सामान्य पूजन, आरती गर्‍यौं। त्यसपछि माताले 'अब सौंप दिया' बोलको समर्पण भजन गाउन भन्नुभयो। उक्त भजन सबै मिलेर अत्यन्त हर्षित हुँदै गायौं। उहाँले सबैलाई आशीर्वाद दिनुभयो। वर्षौंदेखि सूक्ष्मतामा मात्रै स्मरण गर्दै दिन दिनै जयकार गरिइने पूजनीय गुरुमातालाई साक्षात् पाउँदा सबै गर्वित थियौं। सिद्धाश्रम शक्ति केन्द्रमा माताको साक्षात् उपस्थितिले सबैलाई खुसी, उत्साह, उमङ्ग, प्रेरणा थपेको अनुभव भइरहेको थियो। यसरी पूजनीय माताको उपस्थिति सदा सदाको लागि गर्वको विषय बन्यो, एक अद्वितीय क्षण र आश्रमको लागि एउटा गौरवशाली इतिहास बन्यो।

आश्रममा आगमन भएपछि गुरुकृपा आशीर्वादले खोलिएको विद्याश्रममा माताहरुको सवारी भयो। विद्याश्रममा माताको उपस्थितिले सारा विद्यार्थी, कर्मचारीहरु खुसीले गदगद थिए। विश्वास नै गर्न नसकिने क्षण आफ्नो अगाडि देख्दा सबै दङ्ग थिए। माताको स्वागतपछि स्वागत नृत्य देखाइयो। त्यससँगै विद्याश्रमबाट उहाँहरुलाई सम्मान गरियो। अनि केहीबेर अरविन्द गुरुदेवले प्रवचनपछि सबै विद्यार्थीहरुलाई सरस्वती दीक्षा प्रदान गर्नुभयो। यसरी विद्याश्रमका सबै विद्यार्थी, शिक्षक शिक्षिकाहरु सरस्वती दीक्षाबाट दीक्षित भए। सबैमा खुशीयाली छायो, अविस्मरणीय घटना घटी एउटा इतिहास बन्न सफल भयो। जय गुरुदेव!

माताजी तथा अरविन्द गुरुदेव एयरपोर्टमा

एयरपोर्टबाट ह्यात होटलतर्फ प्रस्थान

होटलमा माताजीका साथ नेपाली टोपीमा अरविन्द गुरुदेव

माघ २२ गते शोभायात्राको लागि काष्ठमण्डप जाँदै

माताजी हात्तीलाई स्पर्श गर्नुहुँदै

श्री श्री महायोगी गुरु गोरखनाथको पूजन गर्नुहुँदै माताजी

गुरु गोरखनाथको टीका प्रसाद सुपुत्रलाई लगाइदिनुहुँदै

टोपीमा अरविन्द गुरुदेव

हात्तीमाथि सवार गुरुदेव अरविन्द

शोभायात्रा तथा सद्गुरुदेवहरूको रथ

पहिलो दिन कार्यक्रम स्थलमा अरविन्द गुरुदेव

माघ २३ गते (दोस्रो दिन) साधक साधिकाहरू

अभिनन्दको क्रममा २१ किलोको पुष्पमाला स्वीकार गर्नुहुँदै प्रसन्न मुद्रामा माताजी

सम्माननीय उपराष्ट्रपति श्री परमानन्द झा माताजीलाई अभिनन्दन

*गोरक्ष निखिल वाणी*को विशेषांक विमोचन गर्नुहुँदै सम्माननीय उपराष्ट्रपति

*अद्वितीय युगपुरुष डा. नारायण दत्त श्रीमाली*नामक ग्रन्थको विमोचन गर्नुहुँदै पूजनीय गुरुमाता

माताजीलाई २१

अभिनन्दन पत्र प्रदान गर्नुहुँदै सम्माननीय उपराष्ट्रपति

माताजीलाई उपहार दिनुहुँदै सम्माननीय उपराष्ट्रपति

अरविन्द गुरुदेवलाई उपहार दिनुहुँदै सम्माननीय उपराष्ट्रपति

अरविन्द गुरुदेवलाई दोसल्ला ओ
सम्माननीय उपराष्ट्रपति

पत्र प्रदान गर्नुहुँदै

साधना तथा दीक्षा कार्यक्रमपूर्व पूजनीय माताजी तथा अरविन्द गुरुदेव

किलोको माला लगाउने क्रममा

प्रसन्न मुद्रामा पूजनीय गुरुमाता

माताजीलाई दोसल्ला ओढाउनुहुँदै सम्माननीय उपराष्ट्रपति

ओढाउनुहुँदै
ति

सम्माननीय उपराष्ट्रपतिलाई उपहार प्रदान गर्नुहुँदै पूजनीय गुरुमाता

सम्माननीय उपराष्ट्रपतिलाई गुरु च्यादर ओढाउनुहुँदै अरविन्द गुरुदेव

शिविरमा उपस्थित साधक साधिकाहरु

आशीर्वचनको क्रममा पूज्य गुरुदेव अरविन्द श्रीमाली

समारोहलाई सम्बोधन गर्नुहुँदै सम्माननीय उपराष्ट्रपति

बिदा हुनेक्रममा सम्माननीय उपराष्ट्रपति

सिद्धाश्रम शक्ति केन्द्र केन्द्रीय कार्यालय बसुन्धरामा पूजनीय गुरुमाता तथा अरविन्द गुरुदेव

आश्रममा पूजनीय गुरुमाता तथा अरविन्द गुरुदेवको आरती गर्नुहुँदै संयोजकज्यूद्वय

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम बसुन्धरामा पूजनीय गुरुमाता तथा अरविन्द गुरुदेव

आशीर्वचन तथा सरस्वती दीक्षा प्रदान गर्नुहुँदै अरविन्द गुरुदेव

उक्त अवसरमा विद्याश्रममा उपस्थित विद्यार्थीहरु

बिदाइको क्रममा एयरपोर्टको भीआइपी कक्षमा

बिदाइको क्रममा माताजीसँग संयोजकज्यूहरु

भारतबाट आउनुभएका अतिथिहरुको बिदाइ कार्यक्रम (गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको आरती कक्षमा)

बिदाइको क्रममा भजन प्रस्तुत गर्दै गुरुभाइ शिवा

# सम्माननीय उपराष्ट्रपतिज्यूको सम्बोधन

सर्वप्रथम सिद्धाश्रम शक्ति केन्द्रद्वारा आयोजित यस आध्यात्मिक साधना शिविरमा उपस्थित हुन आउनु भएका सम्पूर्ण भक्तजनहरूमा हार्दिक स्वागत गर्दछु । यस साधना शिविरमा विराजमान हुनभएकी गुरुमाता भगवती देवी श्रीमालीज्यू, श्री गुरु अरविन्दजी तथा उपस्थित सम्पूर्ण महिला तथा सज्जनवृन्द !

गुरुमाताको विशेष कृपाले गर्दा आजको यस समयमा म सहर्ष यहाँहरूको अगाडि उपस्थित भएको छु । मलाई लाग्छ कि यसमा मैले यहाँहरूमाथि कुनै कृपा गरेको होइन, बरु मलाई त गौरव महसुस भइरहेको छ कि मैले यहाँहरू सबैको सान्निध्यता पाइरहेको छु र मैले आफूलाई गौरवान्वित ठानेको छु ।

वास्तवमा यस संस्थाको सम्बन्धमा मलाई त्यति जानकारी थिएन । यसको बारेमा मैले धेरै अध्ययन गर्न पाएको थिइन । यहाँहरूको सान्निध्यता वास्तवमा मैले आज मात्रै पाइरहेको छु । आमन्त्रण पत्रमा यस संस्थाका आराध्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) को सम्बन्धमा केही शब्दहरू लेखेको पाएँ जसअनुसार उहाँ ज्योतिष, सामुद्रिकशास्त्रका सुविज्ञ ज्ञाता, तन्त्रमन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्यविज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्नचिकित्सक आदिका रूपमा विश्वमा विख्यात् एवं महामहोपाध्याय, मन्त्रशिरोमणि, समाजशिरोमणि, जगतगुरु आदिको संज्ञाले विभूषित हुनुभएको भन्ने कुरा मलाई ज्ञात भयो । हुन त आराध्य सद्‌गुरुदेव श्रीमालीज्यूको देहावसान आजभन्दा १२ वर्ष अगाडि नै भएता पनि यस संस्थाको जिम्मेवारी उहाँकी धर्मपत्नी पूजनीय माता भगवती देवी श्रीमालीज्यूले लिइराख्नु भएको छ । उहाँले निरन्तररूपमा राष्ट्रिय र अन्तर्राष्ट्रिय जगतमा साधना शिविर सम्पन्न गर्दै आउनुभएको छ । यसबाट एउटा कुरा स्पष्ट हुन्छ कि उहाँ यस समाजलाई, राष्ट्रलाई र आफ्ना छिमेकी मित्रराष्ट्रहरूका मानिसहरूलाई निरन्तर केही न केही दिइराख्ने अभ्यासमा हुनुहुन्छ । हामी के मान्दछौँ भने जुन व्यक्तिले दिनहुँ केही न केही दिइराख्ने हुन्छ, त्यही व्यक्ति यस धर्तीमा देवता कहलाउँछन् र यस्ता व्यक्तिको अनुकरण र यस्तो व्यक्तिको अभिनन्दन समाजका विवेकवान्, भक्तजनहरू सबैले गर्दै आएका छन् । यसैअनुरूप आज यो हाम्रो नेपालभूमि, त्यसमा पनि पशुपतिनाथको पवित्र भूमिमा पूजनीय माताजीको राष्ट्रिय अभिनन्दन गर्ने कार्यक्रम र उहाँले यहाँका भक्तजनहरू र साधकसाधिकाहरूलाई ज्ञानदानका लागि जुन साधना शिविर संचालन गर्नुभएको छ, यसबाट अवश्य पनि हामी लाभान्वित भएका छौँ । यस्तै कार्यक्रम भविष्यमा पनि उहाँबाट संचालन भइरहोस् भन्ने शुभेच्छा पनि व्यक्त गर्दछौँ ।

आज मैले यस्ती आराध्य माताको सान्निध्यता पाएँ र उहाँलाई सम्पूर्ण नेपाली जनताको तर्फबाट राष्ट्रिय सम्मान गर्ने मौका पाएँ, यो सबैको लागि यस कार्यक्रमका आयोजक र यहाँहरू सबै धर्मप्रेमीलाई म आफ्नो आभार पनि व्यक्त गर्दछु ।

मलाई प्रसन्नता के लागेको छ भने खासगरी गुरुमाताज्यूले भर्खरै आफ्नै हातले पिउनका लागि मलाई पानीको गिलास दिनुभयो । त्यसलाई मैले उहाँको आशीर्वाद मानेँ । बडो प्रसन्नचित्तले मैले त्यो पानी पिएँ । त्यो पानी पिएपछि आफूमा धेरै ऊर्जा र शक्ति आएको महसुस गरेँ ।

मैले धेरै ठाउँमा र आफ्नो जिल्ला भ्रमण गर्दाखेरि दुई वर्षको अवधिमा धेरै कार्यक्रमहरूमा सहभागी हुन पाएँ । अन्यको भन्दा यहाँको उपस्थिति साह्रै सराहनीय र उल्लेखनीय महसुस भइरहेको छ । आज यस पण्डालमा यत्रो जमातमा यस संस्थाका सहयोगी र संस्थासँग आबद्ध सबै साधकसाधिका भाइबहिनीहरूलाई म धन्यवाद दिन्छु र यहाँहरूको यस साधना शिविरबाट आध्यात्मिक ज्ञान, योगशक्तिमा अभिवृद्धि होस् भन्ने कुराको आशा लिँदै पुन: आगामी दिनमा पनि गुरुमाताजीको आगमन यस भूभागमा भइरहोस् भन्ने आग्रह गर्दै आफ्नो भनाइ यहीँ टुंग्याउँछु । धन्यवाद !

*(सम्माननीय उपराष्ट्रपतिज्यूबाट सिद्धाश्रम शक्ति केन्द्रद्वारा गत माघ २२ र २३ गते आयोजित अन्तर्राष्ट्रिय साधना शिविर एवं अभिनन्दन समारोहको दोस्रो दिन व्यक्त सम्बोधनको अंश)*

# अभिनन्दन पत्रको व्यहोरा

## अभिनन्दन-पत्र

विश्व विख्यात् ज्योतिषका महान् विभूति, मन्त्र-तन्त्र, आयुर्वेद, दर्शन, योग, ध्यान, कर्मकाण्ड आदिका मूर्धन्य विद्वान् शिवस्वरूप सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ज्यूकी धर्मपत्नी एवं सद्‌गुरुदेवको आध्यात्मिक युग निर्माणको महान् योजनालाई मूर्तरूप दिँदै देश विदेशका लाखौँ साधक साधिकाहरूलाई आशीर्वाद एवं मार्ग निर्देशन प्रदान गर्नुहुने पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूलाई वहाँले आध्यात्मिक क्षेत्रमा पुऱ्याउनु भएको अतुलनीय योगदानलाई कदर गर्दै सिद्धाश्रम शक्ति केन्द्र नेपालद्वारा आयोजित अन्तर्राष्ट्रिय साधना शिविर कार्यक्रमको दिव्यतम् अवसरमा नेपाली जनताको तर्फबाट अभिनन्दन गर्न पाउँदा हामी अत्यन्त हर्षित छौँ। यहाँको अध्यात्म क्षेत्र एवं शान्त र सुखमय जीवनको कामना गर्दछौँ।

मितिः २०६७ साल माघ २३ गते आइतबार
(तदनुसार ६ फरवरी, २०११)

(विन्देश्वरी बराल)
संयोजक
सिद्धाश्रम शक्ति केन्द्र

(रामजी अर्याल)
अध्यक्ष
पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविर आयोजक समिति

(परमानन्द झा)
सम्माननीय उपराष्ट्रपति
नेपाल
(प्रमुख अतिथि)

# पूज्य गुरुदेव अरविन्द श्रीमालीज्यूको आशीर्वचन

पूजनीय माताजीलाई वन्दना गर्दै महामहिम उपराष्ट्रपति परमानन्द झालाई विशेष आशीर्वाद दिन्छु । तपाईंले आफ्नो बहुमूल्य समयका बावजूद यहाँ आउनुभएर यस सिद्धाश्रम परिवार र नेपालका प्रत्येक कुनाबाट आउनु भएका साधक शिष्यहरुलाई हौसला र उहाँहरुको सम्मान बढाउनु भएको छ, यहाँ उपस्थित भएर प्रेमको परिचय दिनुभएको छ । यो प्रेम, यी साधक शिष्य, नेपालका प्रत्येक कुनाबाट आउनुभएका शिष्यहरु, नेपालका कणकण र माटोका शिष्यहरु तपाईंलाई यो विश्वास दिलाउनुहुन्छ कि तपाईंको नेतृत्वमा तपाईंको स्नेहमा यो पूरा नेपाल राष्ट्रमा विद्यमान भाइचारा, प्रेम, स्नेहकोभाग्यको कणमा त्यो गुरुतत्त्व छ, त्यो नारायणतत्त्व छ, त्यो आनन्दतत्त्व छ र सही अर्थमा पूर्ण गृहस्थजीवनमा भिजेका यी पूर्ण साधु हुन् किनकि यिनीहरुमा जीवन जिउने उत्साह छ, कला छ । तपाईंको नेतृत्वमा यो समाज सधैं प्रगतिशील बनोस्, नेपालको सम्पूर्ण विश्वमा नाम फैलियोस् ।

नेपालको एउटा अभिन्न छवि छ, अमीट छाप छ, यहाँको संस्कृति हजारौंहजार वर्षपछि पनि ज्यूँकात्यूँ छ । यहाँका प्रत्येक व्यक्ति धार्मिक प्रवृत्तिका छन्, प्रत्येक व्यक्ति आस्थावान् छन्, प्रत्येक व्यक्ति जीवनमा आफ्नो कल्याण गर्नुपर्छ भन्ने कुरामा दृढ निश्चयी छन्, आफूद्वारा अरुको कल्याण गर्नुछ भन्ने कुरामा संकल्पित छन् । तपाईंको यिनीहरुप्रति सधैं भरोसा रहोस्, यस्तै म तपाईंलाई पूर्ण कृपाद्वारा आशीर्वाद प्रदान गर्न चाहन्छु, मङ्गल कामना गर्दछु ।

*(पूज्य गुरुदेव श्री अरविन्द श्रीमालीज्यूबाट सिद्धाश्रम शक्ति केन्द्रद्वारा गत माघ २२ र २३ गते आयोजित अन्तर्राष्ट्रिय साधना शिविर एवं अभिनन्दन समारोहको दोस्रो दिन व्यक्त आशीर्वचन)*

# आयोजक समितिको तर्फबाट स्वागत मन्तव्य

श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, हामी सामु साक्षात् उपस्थित हुनुभएकी पूजनीय गुरुमाता, पूज्य गुरुदेव एवं आजको यस पावन दिनमा प्रमुख अतिथिको रूपमा समुपस्थित सम्माननीय उपराष्ट्रपतिज्यू, अन्य अतिथिज्यूहरू र सम्पूर्ण देशविदेशबाट पाल्नुभएका समस्त साधक साधिकाहरूमा सर्वप्रथम सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट स्वागत एवं जय गुरुदेव !

मानवजीवनमा गुरुको महत्त्वलाई दर्शाउँदै गुरु बिनाको जीवनको कुनै अस्तित्व हुँदैन, गुरु बिनाको जीवन पशुतुल्य हुन्छ भनेर शास्त्रले व्याख्या गरेको अवस्थामा सन् १९३५ मा यस धर्तीमा अवतरित भएर परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले सद्गुरुको आवश्यकतालाई परिपूर्ति गर्नुभएको थियो । यसरी २१ अप्रिलमा अवतरण भएर यस धर्तीमा सद्गुरुको आवश्यकतालाई परिपूर्ति गर्नुहुने परमपूज्य सद्गुरुदेवप्रति सर्वप्रथम कोटिकोटि नमन अर्पण गर्दछौँ ।

परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, जसको कुनै शब्दमा चर्चा छैन, योगीहरूमा महायोगी, गुरुहरूका पनि महागुरु हुनुहुन्छ । पृथ्वी माताले त्यस्ता दिव्य महायोगीलाई धान्न गाह्रो हुने भएर होला स्वयंमा अनन्तकला पूर्ण सद्गुरुदेव लिला रच्दै केवल ६४ कला लिएर धर्तीमा अवतरित हुनुभयो । आज उहाँलाई गुरु मानेर उहाँको कृपा, आशीर्वाद पाएर हजारौँलाखौँमा एक अंश पाउनेहरू पनि ठूलठूला सद्गुरुहरू, ठूलठूला महायोगीहरू, ठूलठूला स्वामी बनेका छन् । तर जो विश्वका अधिपति हुनुहुन्छ, जसको कुनै शब्दमा चर्चा छैन, यस्ता दिव्यतम् व्यक्तित्व अवतरित भएर यस धरामा आउँदाखेरि धेरै व्यक्तिहरूले उहाँको दर्शन गर्ने, उहाँसँग नजिक पुग्ने सौभाग्य प्राप्त गरेनन् । हुन त गुरुदेव स्वयंले भन्नुभएको छ कि मानसरोवरको दर्शन सबैका लागि सम्भव हुँदैन, नदीनालाहरूको दर्शन भने सबैले गर्न पाउँछन् । त्यसैले मेरो यो समय केवल शिष्यहरू तयार पार्ने र आध्यात्मिक युगको शंखघोष गर्ने मात्रै हो । आगामी आध्यात्मिक युगको लागि मेरो आवश्यकता पर्दैन, युगको निर्माण त मेरा शिष्यहरूले गर्छन् भनेर युग निर्माणको जिम्मेवारी शिष्यहरूको काँधमा दिने सद्गुरुदेवलाई कोटिकोटि

नमन गर्दछु ।

अब आउने समय आध्यात्मिक युगको हुन्छ, हुन त विदेशीहरूले २०१२ सालमा नै आध्यात्मिक युग हुन्छ भनेर थुप्रै पुस्तकहरूमा उल्लेख गरेका छन् र थुप्रै किसिमका प्रचारमाध्यमहरूबाट यी कुराहरू प्रकाशमा आइरहेका छन् । विदेशीहरू नेपाल आउँदा आध्यात्मिक युगका लागि के तयारी भइरहेको छ भनेर प्रश्न गर्छन् । हामीले दिव्य गुरुवाणीलाई स्मरण गरेर भन्ने गरेका छौं कि परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यसप्रकारको सबै वातावरण बनाइसक्नु भएको छ, उहाँले आफ्ना जीवितजाग्रत शिष्यहरू बनाएर विश्वभरि छरिदिनु भएको छ । गुरुदेवले बारम्बार भन्ने गर्नुहुन्थ्यो कि स्थूलरूपको वेदले हामीलाई मार्गनिर्देशन गर्न सक्दैन, कुनै ग्रन्थले तपाईं हामीलाई साधनात्मक उच्चतामा पुऱ्याउन सक्दैन, म त्यस्तो ग्रन्थ, त्यस्तो पुस्तकहरूभन्दा पनि त्यस्तो ग्रन्थ लेख्तैछु जो आफैमा जीवितजाग्रत होस्, रत्न बनेर चारैतिर फैलिन सकोस् र सारा युगलाई नै आध्यात्मिक भावभूमिले सिंचित गर्न सकोस् । त्यसैले परमपूज्य सद्‌गुरुदेवले विश्वभरि यस्ता जीवितजाग्रत शिष्यहरू तयार पारिदिनु भएको छ र तपाईं हाम्रो काँधमा पनि ठूलो जिम्मेवारी छ, आध्यात्मिक युगको नेतृत्व गुरुदेव निखिलेश्वरानन्द महाराजका सबै शिष्यहरूले गर्दैछन् । त्यसैले पनि यो दिव्य आदेश निर्देशनलाई शिरोधार्य गर्दै नेपालका साधकसाधिकाहरू जुर्मुराएपछि आज यो भव्य साधना शिविर कार्यक्रम आयोजना गर्न सफल भएका छौं, आफ्नो व्यस्त समयका बावजूद पनि यस्तो अद्वितीय दिव्य साधना कार्यक्रममा समुपस्थित भएर प्रमुख अतिथिको आसन ग्रहण गरिदिनु भएकोमा सम्माननीय उपराष्ट्रपतिज्यूप्रति हार्दिक स्वागत पनि गर्दछौं । हुन त सद्‌गुरुदेवहरूको परीक्षामा हामी धेरै अनुभवी भइरहेका थियौं । उहाँलाई यहाँ ल्याउन पनि हामीले धेरै कसरत गर्नुपरेको हुनाले सम्माननीयज्यू पूर्वजन्मका गुरुदेवका कुनै शिष्य योगी हुनुहुन्थ्यो कि भन्ने लाग्यो । गुरुकृपा, आशीर्वाद र श्री पशुपतिनाथको कृपाले उहाँलाई यहाँ ल्याउन पाउँदा अति नै हर्षित हुँदै पुनः एकपटक स्वागत गर्दछु ।

वन्दनीय गुरुमाता जीवनको करिव ७५ वर्षभन्दा पनि बढी हुँदा पनि हजारौंलाखौं शिष्यहरूको दुःखकष्ट हटाउँदै हुनुहुन्छ । हुन त स्थूल रूपमा उहाँको कुनै वर्णन गर्न सकिन्न, कल्पना पनि गर्न सकिन्न । उहाँले साधना, ध्यानमा बस्दा यस्तो चमत्कार देखाइदिनु हुन्छ, हजारौंलाखौं शिष्यहरूलाई एकैपटक मार्गनिर्देशन गर्नुहुने उहाँ स्वयं महालक्ष्मी, महासरस्वती, महाकालीभन्दा अझ धेरै त्यस्तो युगपुरुषकी अर्धांगिनीको रूपमा आउनुहुने, निखिलेश्वरानन्द महाराजको अवतरणको एउटी सहयात्री हुनुहुने वन्दनीय गुरुमाताप्रति कोटिकोटि नमन गर्दछौं । उहाँलाई हामी शिष्यहरूले के नै स्वागत गर्न सक्छौं र ? उहाँलाई हामीले के नै अभिनन्दन गर्न सक्छौं र ? तैपनि शिष्यहरूको भावभूमि हो, उहाँप्रतिको भावभक्ति अर्पण गर्ने एउटा माध्यम त चाहियो, गुरुमातालाई हेर्ने, गुरुमातालाई अभिनन्दन गर्ने र उहाँको कृपा, आशीर्वाद प्राप्त गर्ने यो शिविर त एउटा बहाना मात्रै हो । त्यसैले यस्ता परमादरणीय, परमवन्दनीय पूजनीय गुरुमाताको आदर गर्न हामीसँग कुनै शब्द नै छैन । कुन शब्दले हामी उहाँलाई सम्बोधन गरौं ? तैपनि हामीले केही प्रयत्न गरेका छौं त्यसमा माता अवश्य पनि खुशी भएर आफ्ना बालबालिकाहरू अज्ञानी छन्, मूर्ख छन् उनीहरूलाई कृपा, आशीर्वाद प्रदान गर्दै आगामी दिनमा गुरुदेवले शंखघोष गर्नुभएको आध्यात्मिक युगको निर्माणमा हामीलाई सधैं कृपा, आशीर्वाद प्रदान गर्नुहुनेछ । म सम्पूर्ण शिष्यहरूको तर्फबाट फेरि एकपटक उहाँलाई हार्दिक स्वागत गर्न चाहन्छु ।

पूज्य गुरुदेव अरविन्द श्रीमालीज्यूको पनि हामी कुनै शब्दले व्याख्या गर्न सक्दैनौं । उहाँको पनि हामी हार्दिक स्वागत गर्दछौं । जय गुरुदेव !

*(सिद्धाश्रम शक्ति केन्द्रद्वारा गत माघ २२ र २३ गते आयोजित अन्तर्राष्ट्रिय साधना शिविर एवं अभिनन्दन समारोहको दोस्रो दिन आयोजक समितिको तर्फबाट अध्यक्ष रामजी अर्यालद्वारा व्यक्त स्वागत मन्तव्य)*

# आयोजक समितिको तर्फबाट धन्यवाद ज्ञापन

सर्वप्रथम दादा गुरुदेव स्वामी श्री सच्चिदानन्द महाराज, परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ, परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा कोटि कोटि प्रणाम अर्पण गर्दछु। यहाँ विराजमान पूजनीय गुरुमाता र अरविन्द गुरुदेवको चरणकमलमा कोटि कोटि प्रणाम अर्पण गर्दछु । यहाँ समुपस्थित हुनुभएका सम्माननीय उपराष्ट्रपतिज्यूप्रति नमन गर्दछु र सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा संचालन भइरहेको यस कार्यक्रममा उपस्थित हुनुभएका सम्पूर्ण अतिथिहरू, साधकसाधिका, गुरु दाजुभाइ, गुरु दिदीबहिनी सम्पूर्णमा म जय गुरुदेवको न्यानो अभिवादन ।

आजको दिन वास्तवमा नै ऐतिहासिक दिन छ। यस अर्थमा कि आज स्वयं साक्षात् जगत्‌जननीको अभिनन्दन कार्यक्रम भइरहेको छ, उहाँजस्तो दिव्यात्माको, उहाँजस्तो जगत्‌जननीको अभिनन्दन गर्न पाउनु अर्थात् सम्मान गर्न पाउनु हाम्रो वशको कुरा होइन, हामीमा त्यो साहस नै छैन कि हामी उहाँलाई केही दिन सकौं, उहाँको सम्मान गर्न सकौँ । तर पनि सम्पूर्ण शिष्यको तर्फबाट र सम्पूर्ण नेपाली जनताको तर्फबाट हामीले प्रयास गर्‍यौँ र परमपूज्य सद्‌गुरुदेवको असीम कृपा, अनुकम्पास्वरूप यो प्रयास सफल भयो । यस भव्य समारोहबीच माताको अभिनन्दन हामीले जसरी जान्यौँ, त्यसरी गर्‍यौँ । सम्पूर्ण शिष्यसमुदाय आफैँमा गौरवान्वित भएको आजको यो दिन ऐतिहासिक छ ।

जब दिव्यात्माको अवतरण हुन्छ, धर्तीले उहाँहरूलाई चिन्न सक्दैन । जब श्रीकृष्ण भगवान् आउनुभयो, उहाँलाई युगले चिन्न सकेन । केही ऋषिमुनिहरूले मात्र उहाँलाई चिन्न सके । त्यस्तै, जब भगवान् राम आउनुभयो, उहाँलाई पनि धर्तीले चिन्न सकेन । केही सीमित व्यक्तिहरूले मात्र चिन्न सके । जति पनि दिव्यात्माहरूको र जति पनि युगपुरुषहरूको धर्तीमा अवतरण हुन्छ, हामीले बुझ्नै सक्दैनौँ, उहाँहरूको लीला यस्तो हुन्छ कि उहाँहरूले आफूलाई एउटा सामान्य मानिसको रूपमा प्रस्तुत गर्नुहुन्छ र हामी त्यो लीलाभित्र हराएर उहाँहरूलाई पनि आफूजस्तै देख्छौँ । यस्तै लीला देखाइरहने पूजनीय माताजी हुनुहुन्छ, प्रत्यक्षतः उहाँको स्वरूप अत्यन्तै साधारण छ, एउटी साधारण नारीको रूपमा हामी उहाँलाई देख्छौँ, तर त्यो सामान्यताभित्र कति दिव्यता छ, कति असाधारण कुरा छ त्यसलाई भने हामी देख्न सक्दैनौँ । त्यसलाई देख्न र बुझ्नलाई साधना, ध्यानको बाटोबाट मात्रै सम्भव छ। उहाँको दर्शन पाउनु उहाँलाई देख्न पाउनु हामी सबैको परम सौभाग्य त हुँदै

हो तैपनि हामीले यति नजिकबाट उहाँलाई पाइरहेका छौँ । उहाँको ममतालाई यति नजिकबाट स्थूलरूपबाट पनि पाइरहेका छौँ । आजको यस दिनप्रति, यस क्षणप्रति हामीले जति गर्व गरे पनि कम नै हुन्छ ।

यस्तै युगले चिन्न नसकेका युगपुरुष हुनुहुन्छ हाम्रा परमाराध्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज अर्थात् डा. नारायण दत्त श्रीमालीज्यू । परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस धर्तीमा अवतरित हुनुभयो, डा. नारायण दत्त श्रीमालीको रूपमा उहाँ आउनुभयो, धेरै धेरै कार्य गर्नुभयो, उहाँले आफूलाई एउटा सामान्य मानिसको रूपमा प्रस्तुत गर्नुभयो । यसैबाट युग भ्रमित भयो । उहाँलाई एउटा सामान्य मनुष्य, एउटा ज्योतिष, एक आयुर्वेदज्ञ, एउटा तान्त्रिक, एउटा मान्त्रिकको रूपमा मात्रै देख्यो, उहाँभित्रको विराट्तालाई, उहाँभित्रको ब्रह्मत्वलाई युगले चिन्न सकेन, युगले बुझ्न सकेन । उहाँले आफ्नो अवतरणकालमा यति धेरै कार्य गर्नुभएको छ कि त्यसको लागि यो युग सधैँ नै ऋणी छ । हाम्रा सम्पूर्ण प्राचीन सम्पदाहरू, मन्त्रतन्त्र, ध्यान, योग, आयुर्वेद, सम्मोहन, सूर्यविज्ञान, रत्नविज्ञान, पराविज्ञान, हस्तरेखाविज्ञान, धेरै धेरै हाम्रा प्राचीन विद्याहरूलाई उहाँले यस धर्तीमा पुनर्स्थापित गरिदिनु भएको छ । यी सबै विद्याहरू हाम्रा ऋषिमुनिहरूले हाम्रो लागि, हाम्रो कल्याणका लागि दिनुभएको थियो । मन्त्रतन्त्र, ध्यान, योग, सम्मोहन, आयुर्वेदले देखाएको बाटोमा हिँड्दाखेरि मानिसलाई फाइदैफाइदा हुने स्थिति थियो तर पनि युगको यो कालखण्डमा हामीले त्यस कुरालाई बिर्स्यौँ जसले गर्दा मन्त्रतन्त्रप्रति समाजमा वितृष्णा र भयको वातावरण बन्यो र सम्पूर्ण प्राचीन विद्याहरू लोप हुने स्थिति भयो । यस्तो स्थितिमा परमपूज्य गुरुदेव डा. नारायण दत्त श्रीमालीको स्वरूपमा अवतरित भएर यी सम्पूर्ण विद्याहरूलाई पुनर्स्थापित गरिदिनु भएको छ जसको कारण आजको भौतिक युगमा यी विद्याहरूले निरन्तरता पाइरहेका छन् र यस्तो लाग्छ फेरि ऋषिकालीन परम्पराको शुरुवात भइरहेको छ । आज यहाँहरू ठूलो समूहमा गुरु च्यादर ओढेर यहाँ बस्नुभएको छ, यो देख्दा यस्तो लाग्छ कि फेरि ऋषिकालीन परम्परा शुरु भइसकेको छ, यहाँहरू ऋषिमुनि बन्दै हाम्रा ऋषिमुनिहरूले देखाउनुभएको बाटोमा अग्रसर बनिरहनु भएको छ । यो सौभाग्य, यस क्षण हामीलाई गुरुदेवको अवतरण, उहाँको थुप्रै कार्य तथा अथक प्रयासले नै प्राप्त भइरहेको छ । हामीमात्र होइन, यो सम्पूर्ण विश्व, यो युग नै गुरुदेवप्रति ऋणी छ र जति नै ऋणी भए पनि, जतिसुकै कृतज्ञ भए पनि कम नै छ । आज हामीले यस्तो जुन क्षण पाइरहेका छौँ, यो त गुरुदेवको अवतरणको कारणले हो, त्यसैले यो दिव्यतम् क्षणमा गुरुदेवप्रति हामी सबै शिष्यहरूले नमन अर्पण गर्दछौँ ।

गुरुदेवले सधैँ भन्नुभएको छ कि म कुनै लिखित ग्रन्थ होइन, जीवितजाग्रत शिष्य अर्थात् ग्रन्थ तयार पार्दैछु । वास्तवमा तपाईँ हामीलाई उहाँले त्यसरी नै तयार पारिरहनु भएको छ । तपाईँ हाम्रो माध्यमबाट यो युग आध्यात्मिक युग बन्नुपर्नेछ र सम्पूर्ण ऋषिपरम्परालाई हामीले विश्वभरि फैलाउनुपर्ने हुन्छ । गुरुदेवले हामीलाई अगाडि ल्याउन यसको जिम्मेवारी दिनुभएको छ । उहाँले चाहनुभएको भए यस युगले उहाँलाई चिन्न सक्थ्यो, एउटा सानो चमत्कार देखाउनु भएको भए पनि विश्वले उहाँलाई चिन्न सक्थ्यो । तर उहाँले त्यस्तो गर्नुभएन । आफूलाई लुकाउनुभयो र सधैँ आफ्ना शिष्यहरूलाई अघि ल्याउने प्रयास गर्नुभयो । यसैले उहाँले चुपचाप शरीर छोड्नुभयो । अहिले फेरि तपाईँ हामीलाई अगाडि बढाएर तपाईँ हाम्रो माध्यमबाट युग परिवर्तन गर्न खोज्दै हुनुहुन्छ । त्यसैले हामी सबैको काँधमा ठूलो जिम्मेवारी छ र त्यस जिम्मेवारीलाई ग्रहण गरौँ, यस जीवनको प्रत्येक क्षणलाई गुरुदेवको योजनातिर उन्मुख गरौँ । सम्पूर्ण शिष्य समुदायमा, सम्पूर्ण दाजुभाइ, दिदीबहिनीहरूमा आजको दिन म यही हार्दिक अनुरोध गर्दछु ।

यस कार्यक्रमको आयोजनाका लागि पूजनीय गुरुमाता र पूज्य गुरुदेवले अनुमति दिनुभयो । अनुमति मात्र नदिएर धेरै धेरै हौसला, प्रेरणा दिनुभयो र त्यति मात्रै पनि नभएर उहाँहरू यहाँ आउनुभयो । माताजी आफ्नो स्वास्थ्यको पनि ख्याल नराखी यहाँ आउनुभयो, हाम्रो निमन्त्रणालाई स्वीकारी पाल्नुभयो, हामीले उहाँको सान्निध्यता प्राप्त गर्‍यौँ । उहाँको कारणले नै यस कार्यक्रमले भव्य रूप

अभिनन्दन समारोहमा ठिमी आरती सञ्चालन केन्द्रबाट प्रस्तुत तांत्रिक अष्टमातृका नृत्य

लिइरहेको छ, त्यसैले पूजनीय माताजीलाई साधना शिविरमा आगमन भइदिनु भएकोमा र त्यति मात्रै नभएर अहिले भर्खरै विमोचित ग्रन्थका लागि पनि माताजीले पुऱ्याउनुभएको सहयोग र गुरुदेवसम्बन्धी बनिरहेको डकुमेन्ट्रीका लागि गर्नुभएको सहयोगका लागि र माताजीको नेपाल आगमनका लागि हामी सबै शिष्य समुदायको तर्फबाट उहाँप्रति धेरै धेरै कृतज्ञता व्यक्त गर्दछौँ ।

त्यस्तै पूज्य गुरुदेव अरविन्द श्रीमालीज्यूले धेरै व्यस्तताका बावजूद पनि हामीलाई अमूल्य समय दिनुभएको छ, सद्गुरुदेवको ग्रन्थ लेखनमा हौसला दिनुभयो, डकुमेन्ट्री बनाउने होस् वा यस साधना शिविरको आयोजनामा होस्, उहाँले सधैँ हौसला, प्रेरणा प्रदान गर्नुभयो, उहाँका यी सबै योगदानका लागि र उहाँको नेपाल आगमनका लागि हामी सबै शिष्यहरूको तर्फबाट र सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट उहाँप्रति हामी कोटिकोटि नमन अर्पण गर्दछौँ ।

यस्तै, नेपालका सम्माननीय उपराष्ट्रपतिज्यू अति व्यस्तताका बावजूद हाम्रो आमन्त्रणलाई स्वीकारी यहाँ आउनुभयो, उहाँको यो उपस्थितिबाट हामीलाई उहाँभित्र धेरै आध्यात्मिकता छ भन्ने लागिरहेको छ। उहाँको उपस्थितिले हामीलाई धेरै हौसला, प्रेरणा प्रदान गरिरहेको छ। यो सबैको लागि हामी उहाँप्रति कृतज्ञता व्यक्त गर्दछौँ ।

त्यस्तै, आजको यस कार्यक्रमा हाम्रो आमन्त्रणलाई स्वीकार गरेर स्वदेशलगायत अन्य मुलुकबाट पाल्नुभएका सबैलाई सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट हार्दिक धन्यवाद ज्ञापन गर्दछौँ। यस कार्यक्रमलाई सफल बनाउन हामीलाई सहयोग गर्ने गुरु सेवा आश्रम, डिल्लीबजारप्रति हामी विशेषरुपमा धन्यवाद ज्ञापन गर्दछौँ। त्यस्तै निखिल चेतना केन्द्र बुटवल, सिद्धाश्रम साधक परिवार कपन, साधक परिवार जोरपाटीबाट भएको सहयोग र सद्भावप्रति धन्यवाद ज्ञापन गर्दछौँ । जय गुरुदेव !

*(सिद्धाश्रम शक्ति केन्द्रद्वारा गत माघ २२ र २३ गते आयोजित अन्तर्राष्ट्रिय साधना शिविर एवं अभिनन्दन समारोहको दोस्रो दिन आयोजक संस्थाको तर्फबाट संयोजक विन्देश्वरी बरालद्वारा व्यक्त धन्यवाद ज्ञापन)*

## सवा करोड मन्त्रजप महाअनुष्ठान

# हार्दिक आमन्त्रण

परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा, अनुकम्पावश सिद्धाश्रम शक्ति केन्द्र नेपालले यही शिवरात्रीको पावन अवसरमा ऐतिहासिक जिल्ला गोरखाको गोरख गुफामा सवा करोड गुरुमन्त्र जपको अखण्ड महाअनुष्ठान कार्यक्रम आयोजना गरेको हुनाले उक्त अवसरमा भाग लिनुभई परमपूज्य सद्गुरुदेवहरुको कृपा, आशीर्वाद प्राप्त गर्नुहुन सम्पूर्ण भक्तजन, साधकसाधिकाहरुलाई हार्दिक आमन्त्रण गर्दछौँ।

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**

फोन: २१००१५३

# शास्त्रोक्त शिव पूजन

**शि**व पूजन आरम्भ गर्नुअघि सम्पूर्ण सामग्री एकत्रित गर्नुहोस्। साधकले शिवरात्रिको अवसरमा रात्रिमा नै पूजन गर्नुहोला। पूजनको बेला पवित्र वस्त्र धारण गर्नुहोला। पूजा स्थानलाई शुद्ध गरी त्यहाँ काठका फल्याक (पिर्काजस्तो) राख्नुहोस् र त्यसमाथि सेतो कपडा बिछ्याउनुहोस्।

पूजन सामग्री– शुद्ध जल, गंगा जल, चन्दन, अक्षता, कुंकुम, फूल, बेलपत्र, फूलमाला, पञ्चामृत (दूध, दही, घिउ, मह, सख्खर), वस्त्र, जनै, धूप, नैवेद्य (मिठाई), विभिन्न फलफूल, सुपारी, ल्वाङ, अलैंची तथा 'शिव पूजन सामग्री'।

'शिव यंत्र'लाई ताम्रपात्रमा राख्नुहोस्। यंत्रसँगै पाँचवटा चामलको थुप्रो बनाएर प्रत्येकमा 'रुद्राक्ष' स्थापना गर्नुहोस्। रुद्राक्ष मालालाई पनि एक छेउमा स्थापना गर्नुहोस्।

स्नान गरी नित्य-कर्मपश्चात् शान्त र पवित्र पूजा स्थलमा पहेँलो वा रातो कुनै पनि आसन राखेर पूर्व अथवा उत्तरतिर फर्केर बस्नुहोस् र अगरबत्ती तथा दीयो बाल्नुहोस्।

निम्न मंत्र उच्चरण गर्दै तीनपटक आचमन गर्नुहोस्-

**ॐ नारायणाय नमः।**

**ॐ केशवाय नमः।**

**ॐ माधवाय नवः।**

हात धोएर सम्पूर्ण पूजन सामग्रीलाई आफूनजिकै राख्नुहोला।

**गणपति पूजन**- दुवै हात जोडेर भगवान् गणेशको पूजन गर्नुहोस् -

**परं धाम परब्रह्म परेशं परमाद्भुतम्।**
**विघ्न निघ्न करं शान्तं गणेशं प्रणमाम्यहम्।**
**ॐ गणाधिपतये नमः।**

यसरी फूल, अक्षता र फूल मालाले पूजन गर्नुहोला।

**गुरू पुजन**- फूलको आसन दिएर गुरु आवाहन गर्नुहोस्-

**गुरु ब्रह्मा गुरुर्विष्णुः गुरुदेवो महेश्वरः।**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरुवे नमः॥**
**ध्यान मूलं गुरोर्मूर्तिः पूजा मूलं गूरोः पदम्।**
**मंत्रमूलं गरोर्वाक्यं मोक्षमूलं गुरोः कृपा॥**
**मूकं करोति वाचालं पंगुं लंघयते गिरिम्।**
**यत्कृपा तमहं वन्दे परमानन्द माधवम्॥**
**ॐ शिष्य संतापहारिणे श्री गुरवे नमः।**

अक्षता, फूल तथा धूप, दीयो देखाएर पूजन सम्पन्न गर्नुहोला।

**शिव पूजन**- शिव पूजनको लागि आफूसँग भएको कुनै पनि शिवलिङ्ग प्रयोग गर्न सक्नुहुन्छ अथवा आश्रमबाट प्राणप्रतिष्ठित पारद शिवलिङ्ग मगाउन सक्नुहुन्छ। निम्न मंत्र पढेर भगवान् शंकरको आवाहन गर्नुहोस्-

**ॐ सद्योजातं प्रपद्यामि सद्योजाताय वै नमः।**
**भवे भवे नातिभवे भवस्व मां भवोद्भवाय नमो नमः।**
**ॐ शिवाय नमः। आवाहनं समर्पयामि।**

ध्यान- दुवै हात जोड्नुहोस् -

**नमस्ते निष्कल रूपाय नमो निष्कल तेजसे।**
**नमः सकलनाथाय नमस्ते सकलात्मने॥**

**आत्मने ब्रह्मणे तुभ्यमनन्त गुण शक्तये ।**

**सकलाकल रूपाय शम्भवे गुरवे नमः ।**

**ॐ शिवाय नमः ध्यानं समर्पयामि ।**

**पाद्यं समर्पयामि नमः**

दुई आचमनी जल चढाउनुहोस् ।

**अर्घ्यं समर्पयामि, आचमनीय जलं समर्पयामि नमः ।**

दाहिने हातमा जल लिएर फूल र अक्षता मिलाएर भगवान् शिवलाई चढाउनुहोस् ।

**जल स्नान**- निम्न मंत्र पढेर शिव यंत्रलाई जल स्नान गराउनुहोस्-

**ॐ गंगा सरस्वती देवा पयोष्णी नर्मदा जलैः ।**

**स्नापितोऽसि मया देव स्नानार्थ प्रतिगृह्यताम् ॥**

**ॐ शिवाय नमः स्नानं समर्पयामि ।**

**दुग्ध स्नान**- निम्न मंत्र पढेर शिव यंत्रलाई दूधले स्नान गराउनुहोस् ।

**गोक्षीरधाम देवेश गोक्षीर धवलोपम ।**

**स्नपनं देव देवेश गृहाण परमेश्वर ॥**

**ॐ शिवाय नमः दुग्ध स्नानं समर्पयामि ।**

**दही स्नान**- निम्न मंत्र पढेर शिव यंत्रलाई दहीले स्नान गराउनुहोस् ।

**दध्ना चैव महादेव स्नपनं कार्यते मया ।**

**गृहाण च मया दत्तं सुप्रसन्नो भवाद्य वै ॥**

**ॐ शिवाय नमः दधि स्नानं समर्पयामि ॥**

**घिउ स्नान**- निम्न मंत्र पढेर शिव यंत्रलाई घिउले स्नान गराउनुहोस् ।

**सर्पिषा च मया देव स्नपनं क्रियतेऽधुना ।**

**गृहाण श्रद्धया दत्तं तव प्रीत्यर्थमेव च ॥**

**ॐ शिवाय नमः घृत स्नानं समर्पयामि नमः ॥**

**मह स्नान**– निम्न मंत्र पढेर शिव यंत्रलाई महले स्नान गराउनुहोस् ।

**इदं मधु मया दत्तं तव तुष्टचर्थ मेव च ।**

**गृहाण त्वं हि देवेश मम शान्तिप्रदो भव ॥**

**ॐ शिवाय नमः मधु स्नानं समर्पयामि ।**

**शर्करा स्नान**- निम्न मंत्र पढेर शिव यंत्रलाई सख्खरले स्नान गराउनुहोस् ।

**इक्षुसार समुद्भता शर्करा पुष्टि कारिका ।**

**मलापहारका दिव्या स्नानार्थ प्रतिगृह्यताम् ।**

**ॐ शिवाय नमः शर्करा स्नानं समर्पयामि ।**

यसपछि शुद्ध जलले शिवलिङ्गलाई धोएर गंगा जलले स्नान गराउनुहोस् र कपडाले पुछिदिनुहोस् ।

**जनै**- **यज्ञोपवीत समर्पयामि नमः ।**

जनै अर्पण गरिदिनुहोस् ।

**वस्त्र**- निम्न मंत्र पढेर वस्त्र समर्पण गर्नुहोस् ।

**एतद् वासो मया दत्तं सोत्तरीयं सुशोभनं ।**

**गृहाण त्वं महादेव ममायुष्य प्रदोभव ॥**

**ॐ शिवाय नमः वस्त्रोप वस्त्रं समर्पयामि नमः ।**

यसपछि चन्दन, अक्षता र फूल चढाउनुहोस् ।

**चन्दनं समर्पयामि । ॐ शिवाय नमः ।**

**अक्षतान् समर्पयामि । ॐ शिवाय नमः ।**

**पुष्प मालां समर्पयामि नमः ।**

यसपछि 'ॐ नमः शिवाय' मंत्र उच्चारण गरेर बेलपत्र चढाउनुहोस् ।

**नैवेद्यं निवेदयामि । ॐ शिवाय नमः ।**

नैवेद्यं (मिठाइ) चढाउनुहोस् ।

फल चढाउनुहोस् र मुख शुद्धिको लागि ल्वाङ र अलैंची समर्पित गर्नुहोस् ।

शिव पूजनपछि चामलका पाँच थुप्रा बनाउनुहोस् र क्रमशः प्रत्येक थुप्रोमा निम्न मंत्र उच्चारण गर्दै एउटा एउटा रुद्राक्ष चढाउनुहोस् । यी भगवान् शंकरका पांच स्वरूप हुन्-

ॐ **सद्योजाताय नमः ।**

ॐ **वामदेवाय नमः ।**

ॐ **अघोराय नमः ।**

ॐ **तत्पुरुषाय नमः ।**

ॐ **ईशानाय नमः ।**

यिनको चन्दन, अक्षता, धूप, दीप एवं फूलले पूजन सम्पन्न गर्नुहोस् ।

यी पाँच समूहको अगाडि कुनै पात्रमा शिव यंत्रलाई स्थापना गर्नुहोस् । स्नान, अक्षता, फूल, धूप, दीप आदि गरी यंत्रलाई पूजा गर्नुहोस् । यसपछि रुद्राक्ष मालाले निम्न मंत्रको ११ माला जप गर्नुहोस् ।

**मंत्र**-

**॥ ॐ शं शंकराय भवोद्भवाय शं ॐ नमः ॥**

जप समाप्तिपछि आरती गर्नुहोस् ।

आरतीपछि दुवै हातमा फूल लिएर निम्न मंत्र पढ्नुहोस् र शिवजीलाई पुष्पाञ्जलि अर्पित गर्नुहोस् ।

**अज्ञानाद् यदि वा ज्ञानाद् जप पूजादिकं मया ।**

**कृतं तदस्तु सफलं कृपया तव शंकर ॥**

सबै सामग्रीलाई भोलिपल्ट नदीमा प्रवाहित गरिदिनुहोस् । जय गुरुदेव !

# किरातभेषधारी शिवको अर्जुनमाथि कृपा

द्रौपदीसहित पाँच पाण्डव अज्ञातवासमा रहँदा उनीहरूको कष्टलाई देखेर भगवान् श्रीकृष्ण तथा महर्षि व्यासले अर्जुनसित भगवान् शिवलाई प्रसन्न गरेर उहाँको वर प्राप्त गर्नका लागि सुझ्याउनुभयो र यसका लागि उपाय पनि बताउनुभयो। वीर अर्जुन आफू तथा राज्यमाथि आएको संकट हटाउनका लागि व्यासजीको निर्देशानुसार इन्द्रकील पर्वतमा गए । त्यहाँ उनले जाह्नवीको मनोहर तटमा चित्ताकर्षक पार्थिव शिवलिङ्गको निर्माण गरे र त्यसको विधिवत् पूजन गर्दै तप गर्न लागे । गुप्तचरहरूद्वारा इन्द्रलाई यसको बारेमा थाहा भयो । उनलाई आफ्ना पुत्रको मनोरथको पनि जानकारी भयो । उनी वृद्ध ब्रह्मचारीको वेष धारण गरेर अर्जुनको परीक्षा लिने उद्देश्यले त्यहाँ आइपुगे तथा अर्जुनको आतिथ्य ग्रहण गरेपश्चात् अनेकौं प्रकारले उनलाई तपबाट विमुख गर्ने प्रयत्न गर्न लागे। तर अर्जुनको दृढ निश्चय देखेर उनी आफ्नो वास्तविक रूपमा प्रकट भए । उनी शंकरको दिव्य मन्त्रको उपदेश र आफ्ना अनुचरहरूलाई अर्जुनको रक्षाका लागि आदेश दिएर अन्तर्ध्यान भए ।

त्यसपछि महर्षि व्यासको कथनानुसार अर्जुनले एउटा खुट्टामा उभिएर सूर्यतिर एकाग्र दृष्टि गरेर भगवान् शिवको ध्यान गर्दै उहाँको दिव्य पञ्चाक्षर मन्त्र (ॐ नमः शिवाय) को जप गर्न लागे। उनको घोर तपलाई देखेर देवगण आश्चर्यचकित भए। उनीहरू भगवान् शिव कहाँ गएर अर्जुनलाई वर प्रदान गर्नका लागि प्रार्थना गर्न लागे । देवताहरूको प्रार्थना सुनेर भगवान् शिव मुस्कुराएर उनीहरूलाई निश्चिन्त रहनका लागि भन्नुभयो। देवताहरू आश्वस्त भएर आ-आफ्ना स्थानतिर फर्के ।

यता दुर्योधनद्वारा पठाइएको 'मूक' नामक एक मायावी राक्षस सुंगुरको रूप लिएर अनेकौं प्रकारका भयंकर शब्द गर्दै तथा वृक्ष पर्वतादिलाई उखेलेर फ्याँक्दै अर्जुन तपस्या गरिरहेको ठाउँमा आइपुगे । उसलाई देखेर अर्जुनले आफ्नो अनिष्ट गर्नका लागि आएको भन्ने कुरा बुझिहाले । अतः उसलाई मार्नका लागि वाणको संधान गर्न लागे। त्यसैबेला भक्तवत्सल शिव अर्जुनको रक्षा गर्न तथा उनको परीक्षा लिनका लागि आफ्ना गणसहित भीलको भेष धारण गरेर त्यहाँ उपस्थित हुनुभयो। त्यस भीलसमूह मुखबाट विविध शब्दघोष गरिरहेका थिए । यता सुंगुरले पनि भयंकर घोष गऱ्यो । अर्जुनले त्यस भीलराजको शब्दलाई सुनेर मनमनै शंका गर्न लागे कि कहीं उहाँ किरातभेषधारी भगवान् शिव त हुनुहुन्न ? उनले यस्तो सोच्दै गर्दा सुंगुर पनि त्यहीं आइपुग्यो । भीलराज तथा अर्जुन दुवैबाट उसलाई मार्न एकैसाथ वाण छोडियो । भीलराजको वाण सुंगुरको पुच्छरमा लाग्यो र मुखबाट निस्केर पृथ्वीमा गयो जबकि अर्जुनको वाण मुखबाट पुच्छरतिर गएर पृथ्वीमा झऱ्यो । सुंगुर तत्काल मऱ्यो ।

तत्पश्चात् अर्जुन आफ्ना वाण उठाउनका लागि झुकेका मात्रै थिए कि भीलराजको आज्ञाले उहाँका अनुचर पनि त्यस वाणलाई उठाउनका लागि झम्टिए र अर्जुनसित वाण माग्न लागे। त्यो वाण आफ्नो भएको र त्यसमा आफ्नो नाम समेत अंकित भएको अर्जुनले धेरै सम्झाए पनि उनीहरू आफ्नो हठमा अडिरहे । यसप्रकार दुवैमा धेरै समयसम्म वादविवाद भयो । अन्तमा उनीहरूले अर्जुनलाई कृतघ्न तथा मिथ्याभाषी आदि शब्दहरूद्वारा अपमानीत गर्दै युद्धका लागि ललकारे। तब अर्जुनले क्रुद्ध भएर भने, 'म तिमीहरूसित होइन, तिमीहरूका राजासित लड्छु।' गणद्वारा अर्जुनको कुरा सुनेपछि किरातभेषधारी भगवान् शिव आफ्ना गणसहित युद्धका लागि त्यहाँ उपस्थित हुनुभयो र दुवैमा भयंकर युद्ध भयो । अर्जुनको वाणको आघातबाट आत्तिएर शिवगण चारैतिर भाग्न लागे। किरातराजले अर्जुनको कवच तथा सबै वाणलाई नष्ट गर्नुभयो। तब अर्जुनले भगवान् शिवको स्मरण गरेर त्यस किरातको खुट्टा समाएर घुमाउन लागे । त्यसैबेला भगवान् शंकरले आफ्नो परमसुन्दर वास्तविकरूप प्रकट गर्नुभयो जसलाई देखेर अर्जुन अवाक् भए तथा लज्जित हुँदै अनेकौं प्रकारले पश्चात्ताप गर्न लागे । तब शिवजीले उनलाई अनेकौं प्रकारले आश्वस्त पार्दै भन्नुभयो, 'म तिमीसित प्रसन्न छु, वर माग ।' अर्जुनले भने भक्तिभावले पूर्ण भएर अनेकौं प्रकारले भगवान् शिवको स्तुति गर्दै बारम्बार प्रणाम गर्न लागे । भगवान् शिवले हाँसेर पुनः भन्नुभयो, 'म तिमीसित अत्यधिक प्रसन्न छु, जे तिमीलाई अभिष्ट लाग्छ, माग ।' अर्जुनले भने, 'नाथ ! ममाथि शत्रुहरूको जुन संकट थियो, त्यो हजुरको दर्शन मात्रैले नष्ट भयो, अतः जसबाट मेरो इहलोकको परासिद्धि हुन्छ यस्तो कृपा गर्नुहोस् ।' तब भगवान् शिवले आफ्नो अजेय पाशुपतास्त्र अर्जुनलाई दिनुभयो र भन्नुभयो, 'वत्स ! यस अस्त्रले तिमी सदा अजेय रहनेछौ, जाऊ र विजय हासिल गर । म श्रीकृष्णसित पनि तिम्रो सहायताका लागि भन्नेछु।' यसप्रकार भगवान् शिव अर्जुनलाई आशीर्वाद दिएर अन्तर्ध्यान हुनुभयो । अर्जुन प्रसन्नचित्त भएर आफ्ना बन्धुहरू कहाँ फर्केर आए । (शिवपुराण)

# हलेसी महादेव

**करचरणकृतं वा कायजं कर्मजं वा**

**श्रवणनयनजं वा मानसं वापराधम् ।**

**विहितमविहितं वा सर्वमेतत् क्षमस्व**

**जय जय करुणाब्धे श्रीमहादेव शम्भो ॥**

खोटाङ जिल्लाको महादेवस्थान गा.वि.स. अन्तर्गत हलेसीमा महादेवस्थान (तीर्थ) अवस्थित छ। यस तीर्थस्थलको अस्तित्व चीरकालदेखि रहिआएको हो । वि.सं. १८६१ मा यस तीर्थको सम्बन्धमा केही गुठीको व्यवस्था भएको ताम्रपत्र पाइएको र यसमा '१८४३ सालमा श्री ५ रणबहादुर शाहबाट भएको गुठीको बन्दोबस्तलाई अहिले पनि कायमै राखिएको छ' भन्ने उल्लेख भएको देखिँदा यस तीर्थस्थलको अस्तित्व परापूर्वकालदेखि नै रहिआएको पुष्टि हुन्छ ।

हलेसी महादेवस्थान नेपालको एक प्रख्यात तीर्थस्थल हो । यहाँ दर्शन पूजन गर्न भारत र भुटानबाट समेत श्रद्धालु भक्तजनहरू आउने गर्छन् । राष्ट्रियस्तरमा मात्र नभएर यस तीर्थको ख्याति अन्तर्राष्ट्रिय स्तरमा पनि रहेको पाइन्छ । यस स्थानमा कुनै उल्लेखनीय मन्दिर छैन । यहाँको मन्दिर भन्नु नै एउटा प्राकृतिक गुफा हो । यो गुफा जमीनको सतहदेखि करिव तीनसय फिटसम्म तल गएको अनुमान हुन्छ । करिव दुई हजार वर्गफीटभन्दा बढी फैलिएको गुफाको क्षेत्र ठूलो र लामो पनि छ । त्यहाँ जानका लागि सिँढीहरू बनाइएका छन् र यिनै खुड्किलाहरूबाट तलसम्म गएपछि देखिने रहस्यमय गुफाको एक छेउमा रहेको प्राकृतिक शिलालाई हलेसी महादेवको नामले पूजा गरिन्छ । यस प्राकृतिक शिवलिङ्गलाई तामाको चतुर्मुखी शिवलिङ्गले छोपेर राखिएको छ र गुफाभित्र (शिवलिङ्ग) महादेवका अतिरिक्त 'पार्वतीस्थान' पनि छ । पहिले यहाँ जान बाटो विकट हुनाले निकै कठिनाई हुन्थ्यो । हाल सिँढीहरू बनाइएकाले सजिलैसित जान सकिन्छ । यहाँबाट अझ भित्र जानका लागि पापद्वार, धर्मद्वार, कर्मद्वार र गर्भद्वारहरू पनि छन्, यहाँ जुनसुकै मानिसहरू छिर्न सम्भव छैन । छिर्न सकेमा मोक्ष प्राप्ति हुन्छ भन्ने जनधारणा रहेको छ ।[1]

गुफामा प्रवेश गर्न एउटा मात्र द्वार बनाइएको छ । शिवलिङ्ग र अरू धार्मिक स्थलहरूलाई पर्खालले घेरिएको छ र त्यहाँ भित्र दुईवटा आन्तरिक प्रवेशद्वार र निकासद्वारहरू बनाइएका छन् ।

हलेसी महादेवको पूजाका लागि गुठी जग्गाको व्यवस्था रहेको छ । यसैको आयस्ताबाट दैनिक नित्य पूजाको काम हुन्छ । दर्शन गर्न आउने श्रद्धालु भक्तजनहरूबाट पनि यहाँ भेटीको चढनी पढनी राम्रै हुन्छ । यसले पनि पूजा खर्च र पुजारी खानगीमा मद्दत पुऱ्याएको छ । यहाँ गिरी जातिका मानिस पुजारी हुन्छन् र यिनै पुजारीहरूबाट बिहानबेलुकी धूप, दीप, नैवेद्य, चन्दन, अक्षता, अवीर, फलफूल र बेलपत्र चढाएर खड्खघण्ट, झ्याली, दमाहा, सहनाई आदि बाजाहरू बजाई महादेवको विधिवत नित्य पूजा हुने गर्छ । प्रत्येक पूर्णिमाको दिन भगवान्को विशेष पूजा हुन्छ, रुद्रीपाठहरू लगाइन्छन् ।

यसै तीर्थस्थलको अलिकति दूरीमा बसाहा (नन्दी) स्थान छ । यहाँ पनि प्राकृतिक शिलाकै शिवका वाहन (साँढे) रहेका छन् । यिनको पनि पूजा गरिन्छ । यो स्थल पनि मुख्य गुफाकै एक आङ्गिक तीर्थस्थल हो ।

यहाँ शिवरात्री, हरितालिका (तीज), रामनवमी, बालाचतुर्दशी, हरिशयनी र हरिबोधनी एकादशी आदि धार्मिक पर्वहरूमा मेला लाग्ने गर्दछ । त्यस समयमा स्वदेशविदेशसमेत टाढाटाढाबाट पनि श्रद्धालु भक्तजनहरू भगवान् महादेवको दर्शन गर्न एवं मेला भर्न आउने गर्दछन् । सारांशमा हलेसी महादेव नेपालका मूर्धन्य तीर्थस्थलहरूमध्ये एक हुन् । यिनलाई पूर्वका पशुपतिनाथ पनि भन्छन् । यिनको महिमा अनन्त छ । यहाँ दर्शनपूजन गर्नु भुक्तिमुक्तिदायक मानिन्छ ।

सगरमाथा अंचलको पहाडी जिल्ला खोटाङको सदरमुकाम दिक्तेलबाट महादेवस्थान पुग्न करिव नौ/दश कोश पैदल बाटो (उकाली ओराली) हिँड्नुपर्छ । दूधकोशीको दोभान पुगेर त्यहाँबाट करिव तीन घण्टाको उकालो चढेपछि हलेसी गुफा पुग्न सकिन्छ । वरिपरि वनजंगल भएको हरियो डाँडाको दक्षिणपट्टि तल हलेसी गुफा तेर्सो (ओडार) र माथि अर्को गुफा पनि रहेका छन् । यो गाउँबस्ती भएको ठाउँ हुँदा खानबस्नका लागि खासै असुविधा छैन । मेलाको समयमा बजारै लाग्छ ।

जय गुरुदेव !

# नाथ सम्प्रदायमा नाद

यसो हेर्दा नाथ सम्प्रदायका योगीहरूलाई कान चिरेर मुद्रा अर्थात् कुण्डल धारण गरेकोबाट चिनिने गरिएता पनि उनीहरूको पहिचान गर्ने मुख्य चौध चिह्नहरू रहेका छन्। ती हुन्- मुद्रा, धंधारी, किंगरी, सिंगी, सुमिरनी, अधारी, सोटा, मेख्ला, सिंहनाद जनै, कंथा, गुदरी, खप्पर, त्रिपूण्ड्र, भस्म स्नान। तर नाथयोगीहरूले विशेष उपयोगमा ल्याउने गरेको 'नाद'को बारेमा कमैले बुझेका हुन सक्छन्। त्यसैले यसै विषयवस्तुबारे केही चर्चा गरौं।

नादको शाब्दिक अर्थ हो आवाज निस्किनु। विशेष गरेर पवित्र काठ र धातुहरूबाट निर्माण गरिने त्यस वस्तुलाई मुखले फुक्दा आवाज आउने हुनाले नै यसलाई नाद भनिएको हुनसक्छ। हुन त नाथयोगीहरूसँग आवाज आउने वाद्ययन्त्र किंगरी र सिंगी पनि हुन्छन्। तर नाद यीभन्दा फरक हुन्छ। यो सिंहनाद जनैमा जोडिएको हुन्छ। त्यस जनैलाई ऊर्णासूत्र भनिन्छ। यो सूत्र शिवसूत्र, ब्रह्मसूत्र (जनै) जस्तै भएता पनि तिनीहरूभन्दा फरक हुन्छ। यसलाई नाथयोगीहरूले कालो ऊनको धागोबाट निर्माण गरेर मालाजस्तै गरी धारण गरेका हुन्छन्। 'सुन, ऊन जूठो हुँदैन' भनिएजस्तै यो जनै पनि कहिल्यै अपवित्र नहुने मान्यता नाथयोगीहरूको रहेको छ। त्यसैले यसलाई पवित्रसूत्र पनि भनिन्छ। यो धारण गरिसकेपछि योगमार्गको थालनी गरिने हुनाले कसैले यसलाई योगसूत्र पनि भन्ने गर्दछन्। ऊर्णासूत्र आठवटा प्राकृतिक ऊनको धागोबाट निर्माण गरिएको हुन्छ। यसलाई अष्टवसुस्वरूप मानिएको पाइन्छ। यसमा हरिणको सिङ अथवा तामा वा पित्तलले बनेको मुद्रा आकारको धातु पनि राखिएको हुन्छ, त्यसलाई पवित्री भनिन्छ। त्यसपछि एउटा रुद्राक्ष पनि गाँसिएको हुन्छ, जसलाई नाथ योगीहरूले रक्तचापलाई नियन्त्रण गरेर योगमार्गमा अगाडि बढ्न सजिलोका लागि राखिएको बताउँछन्। त्यसै ऊर्णासूत्रमा पवित्री र रुद्राक्षपछि नाद बाँधेर राखिएको हुन्छ।

नाद यसो हेर्दा बुद्धिचाल खेलको गोट्टी (मन्त्री, ऊँट) जस्तै देखिए पनि यसको बीचको भागमा प्वाल हुन्छ, जसबाट धागो छिराउने काम गरिनुका साथै फुक्दा आवाज पनि निस्कने गर्दछ। ऊर्णासूत्रमा नादको अतिरिक्त राखिएको तामा वा पित्तलले बनेको पवित्री पुरानो मुद्राको आकारमा रहेको हुन्छ। त्यसको बीचमा प्वाल हुन्छ र त्यही प्वालमा ऊनको धागोले बाँधिएको हुन्छ। त्यसपछि एउटा रुद्राक्ष र आफ्नो ग्रहअनुसारको रत्नजस्तै मोती, पन्ना, मुगा आदि पनि राखेर लगाउने चलन छ जसले गर्दा नवग्रह आदिका विकिरणहरू अनुकूल बनेर योग साधन सजिलो हुने मान्यता रहीआएको छ।

त्यसपछि उक्त धागोमा नाद झुण्डयाइएको हुन्छ। यो नाद सुन, चाँदी, चन्दनको काठ, कुनै पवित्र काठहरू, हस्तीहाड आदिबाट निर्मित हुन्छ। पहिले पहिलेका नाथयोगीहरूले खाग, हीरा, मणि आदिबाट निर्माण गरिएको नाद पनि धारण गर्थे भन्ने भनाइ छ। विभिन्न कुराहरूबाट नाद बनाइने गरिएता पनि धेरैजसो वासा असुरा भन्ने वनस्पतिका काठबाट निर्माण गरिएको पाइन्छ। सजिलै प्राप्त गर्न सकिने र बनाउन पनि सजिलो हुने हुनाले धेरैजसो यस काठबाट नाद बनाइने कुरा नाथयोगीहरू बताउँछन्।

नाद तयार भइसकेपछि त्यसलाई एउटा रुद्राक्ष र पवित्रीको साथमा आठ सूत्र भएको कालो ऊनको धागोमा उनिन्छ। यसपछि गुरुद्वारा त्यसलाई अभिमन्त्रित नादको माध्यमबाट कानमा मन्त्र फुकेर सुनाउने गरिन्छ। त्यसपछि नादसहितको त्यो सूत्र शिष्यले धारण गर्ने चलन छ।

नाथ पन्थमा लाग्नको लागि कर्णभेद (कान चिर्ने) संस्कार भएकै हुनुपर्छ। तर कानमा कुण्डल लगाउनुपूर्व गरिने विभिन्न संस्कारहरूमा उपदेशी भन्ने एउटा संस्कार पनि पर्दछ। यस

संस्कारमा गुरुले चेलालाई मन्त्रदीक्षा दिनुहुन्छ र त्यो मन्त्र सोही नादबाट शिष्यलाई श्रवण गराउनुहुन्छ। 'शब्द गुरु श्रुति चेला' भन्ने उखानलाई हृदयङ्गम गर्ने नाथयोगीहरूका लागि नाद धेरै महत्त्वपूर्ण मानिन्छ। त्यसैले जो उपदेश लिन चाहने छ, दीक्षा लिन चाहने छ, उसलाई गुरुबाट अभिमन्त्रित नाद, रुद्राक्ष र पवित्रीसहितको ऊर्णासूत्र धारण गारइन्छ। त्यही क्षणबाट नै शिष्यले त्यो पन्थ नछोड्ने, विभिन्न नीति नियमका साथै ब्रह्मचर्यमा रहने आदि सङ्कल्प गर्दै गुरु धारण गर्दछ। नाथ सम्प्रदायमा विभिन्न संस्कारहरू गराउने थुप्रै गुरु हुन सक्छन्, जस्तै त्याग र उपदेशीका गुरु, कर्णभेद, संस्कारका गुरु आदि।

ब्रह्मसूत्रलाई व्रतबन्ध गरिकेपछि लगाइएजस्तै योगसूत्र व्रतबन्ध गरेको व्यक्तिलाई पनि उपदेशी संस्कार लिइसकेपछि मात्र प्राप्त हुन्छ। उपदेशी संस्कारमा गुरुबाट शिष्यलाई आत्मज्ञानको विशेष मन्त्र र शब्द ज्ञानलाई यसै नादमार्फत् अन्तर्नादबाट कानमा दिएर उसलाई दीक्षा दिने कार्य हुन्छ। भनिन्छ अञ्जनीलाई ब्रह्माजीले यो ज्ञान दिनुभएको थियो। यसैबेलादेखि नै शिष्यले त्यसै धर्ममा कटिबद्ध हुने, त्यस कर्मलाई धान्ने, अकार्य नगर्ने आदि प्रतिज्ञा गरेर दीक्षित, उपदेशी भइसकेपछि लगाउने जुन पहिचान हो त्यो नै नाद, पवित्री, रुद्राक्ष र ऊर्णासूत्र हो। यस उपदेशी संस्कारमा यसलाई धारण गरिसकेपछि मात्र ऊ योग साधनाको अधिकारी मानिन्छ। त्यसपछि मात्र कर्म पुगिसकेकाहरूले त्यससँगै अथवा पछि कानमा कुण्डल लगाउने परम्परा रहेको छ।

यो संस्कार गर्दा गुरुले नाथयोगीहरूको नयाँ नाम राखिदिनु हुन्छ र त्यसै नयाँ नामबाट नै शिष्य नयाँ योग कर्मको थालनी गर्दछ।

नादलाई नाथयोगीहरूले कुनै पनि सुकार्य गर्नुअगाडि तीनपटक फुंकेर मन्त्रजप गर्ने गरेको बताउँछन्। यो तीनपटकदेखि छपटकसम्म पनि विभिन्न देवीदेवताहरूको स्मरण गर्दा फुक्ने चलन छ र गुरुलाई स्मरण गर्दा तीनपटक र अरू देवीदेवताहरूलाई स्मरण गर्दा छपटक बजाउने चलन रहेको कुरा नाथयोगीहरू बताउँछन्।

नादको प्रयोजनको सन्दर्भमा नाथयोगीहरू यस्तो धारणा राख्दछन्, 'जब हामी कुनै कर्म गर्दछौँ वा कुनै कर्म गर्नको लागि आसन लिन्छौँ, त्यसबेला नाद बजाउने गर्दछौँ। योग साधनको लागि गरिने चौरासी आसन आदि लगाउँदा त्यस (कुनै) स्थानमा बस्नुपर्‍यो भने पनि त्यस भूमिलाई नादले शुद्धिकरण गरेर, नाद बजाएर हामी त्यहाँ बस्छौँ। त्यस्तै कुनै मन्दिरमा देवताहरूको दर्शन गर्नुपर्‍यो भने पनि मन्त्रहरू अथवा कुनै स्तुतिहरू आदि गरिसकेपछि नाद बजाएर नै उहाँलाई दर्शन गर्ने हाम्रो परम्परा अथवा धर्म हुन्छ। त्यसैगरी कोही मान्यजहरूलाई गोडामा ढोग नदिएर दुवै हातबाट मुठ्ठी आकारमा नमस्कार मुद्रा जस्तै गरी दुवै बूढी औंलालाई जोडेर आदेश गरिन्छ र आत्मा, जीवात्मा र परमात्मालाई एकै ठाउँमा योग गरेर अनि यो नाद बजाएर दर्शन गर्ने चलन छ। नाद कुनै शुभ कार्यको थालनी गर्नको लागि, पूजा आदि गर्नको लागि बजाउँछौँ। यसलाई मन्त्रपुट, विभूतिपुट, जलपुट आदि गरेर मन्त्रजप गरिसकेपछि बजाउने चलन छ। यो नाथ सम्प्रदायको चिह्न हो।'

नादको उत्पत्ति देवाधिदेव महादेवबाट भएको हो भन्ने मान्यता रहीआएको छ। जबदेखि जैविक सृष्टि भयो, त्यसै समयदेखि नै, उनै आदिनाथको पालादेखि नै नाथ सम्प्रदायको व्युत्पत्तिसँगै नादका प्रक्रियाहरू भएको नाथयोगीहरूको विश्वास छ। नाथ सम्प्रदाय अन्य सबै सम्प्रदायभन्दा प्राचीन मानिन्छ र नाथयोगीहरू नाद, ऊर्णासूत्र आदि चिह्नादिका कारण पनि आफूलाई संसारभन्दा फरक मान्दछन्। नाथ सम्प्रदायको यस्तो विश्वास छ कि स्वयं देवाधिदेव महादेवले मत्स्येन्द्रनाथजीलाई नादसहित सबै चिह्नादिको महत्त्व बताउनुहुँदै भन्नुभएको थियो, 'तिमीले पनि यो नाद र ऊर्णासूत्रजस्तै स्वयं आफूलाई संसारबाट अलग सम्झिनू।'

नाथयोगीहरू ऊर्णासूत्रमा झुण्डयाएर राखिएको नादलाई चौबीसै घण्टा आफूसँग राख्ने गर्दछन्। तर कुनै कर्म नगरिएको अवस्थामा यसलाई कुनै पवित्र ठाउँमा राख्न पनि सकिन्छ। नादलाई सधैँ पवित्र मानिने हुनाले यसलाई कहिल्यै फेर्न नपर्ने मान्यता रहेता पनि भौतिक चीज भएकोले टुटफुट, जीर्ण आदि भएको खण्डमा विभिन्न संस्कार गरी अभिमन्त्रण, मन्त्रपुट आदि गरेर ऊर्णासूत्रका साथै नयाँ नाद लिन सकिने प्रावधान छ। नादले अष्टाङ्ग योग साधनलाई सजिलो पर्ने बताउने नाथयोगीहरू आफूले धारण गरेको नाद आवश्यक परेको खण्डमा आफ्ना गुरुदाइ, गुरुभाइहरूलाई दिन पनि सकिने कुरा बताउँछन्।

गृहस्थ एवं संन्यासीहरूले पनि नाथसम्प्रदायमा ऊर्णासूत्र नाद धारण गर्न सक्छन् तर ब्रह्मचर्यमा रहेर प्रत्याहार आदि नीति नियमहरू उनीहरूले पालन गर्नुपर्ने हुन्छ।

यसरी हेर्दा नाथ सम्प्रदायको पहिचान मानिने नादका विभिन्न प्रयोजन, उपयोगिता र महत्त्वहरू छन्। नाथ योगीहरूले साँझ, बिहानका दैनिक क्रियाकलापहरू गर्नुपर्ने बेलामा यसलाई प्रयोगमा ल्याउने गरिएको पाइन्छ। विभिन्न रोगको उपचार र अन्य गोप्य प्रयोगहरू पनि यसबाट सम्पन्न गर्न सकिने कुराहरू पनि नाथयोगीहरू बताउँछन्। यसरी अध्यात्म क्षेत्रमा यस्ता विभिन्न गूढ कुराहरू हुन्छन्। आज लोप हुन लागेका यस्ता कुराहरू र अन्य थुप्रै गुप्त रहस्य र शक्तिहरूको बारेमा अनुसन्धान गर्नुपर्ने आवश्यकता देखिएको छ। जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौं । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौं

## भाग्य रेखा

यदि कसैको हतकेलामा एकभन्दा बढी भाग्यरेखाहरू छन् र दुवैको समाप्ति शनि पर्वतमा हुन्छ भने ती दुवै रेखाको संयुक्तफल व्यक्तिले पाउँछ । शनिरेखा वा भाग्यरेखाको समाप्तिमा यदि स-साना रेखाहरू निस्केका छन् भने यी रेखाहरूले व्यक्तिको महत्त्वाकांक्षालाई सूचित गर्दछ । यदि यसप्रकारका रेखाहरू तलतिर झरेका छन् भने व्यक्तिले जीवनमा धेरै नै तनावको सामना गर्नुपर्ने हुन्छ ।

तल भाग्य रेखासम्बन्धी केही नयाँ तथ्यलाई स्पष्ट गरिन्छ–

१. यदि भाग्यरेखा सीधा स्पष्ट छ भने अथवा शनि पर्वतबाट भएर सूर्य पर्वततिर गएको छ भने उक्त व्यक्तिले कलाको क्षेत्रमा विशेष सफलता प्राप्त गर्दछ ।

२. यदि यो रेखा रातो रङको छ भने तथा माझी औंलाको पहिलो खण्डसम्म पुगेको छ त्यस व्यक्तिको दुर्घटनामा मृत्यु हुन्छ ।

३. यदि यो रेखा हृदय रेखालाई काट्ने बेला जंजीर (सिक्री) समान बनेको छ भने उसलाई प्रेमको क्षेत्रमा बदनामीको सामना गर्नुपर्ने हुन्छ ।

४. हृदयरेखा यदि हत्केलाको बीचमा फिका वा पातलो अथवा अस्पष्ट छ भने व्यक्तिको यौवनकाल दु:खमय हुन्छ ।

५. यदि व्यक्तिको हतकेलामा भाग्यरेखाका साथसाथै सहायक रेखाहरू पनि छन् भने उसको जीवन अत्यन्त सम्मानित हुन्छ ।

६. यदि भाग्यरेखा जंजीरदार अथवा लहरदार छ भने जीवनमा उसले धेरै दु:खको सामना गर्नुपर्ने हुन्छ ।

७. जसको हत्केलामा भाग्यरेखा हुँदैन, उसको जीवन अति नै साधारण र नगण्य हुन्छ ।

८. यदि भाग्यरेखा प्रारम्भबाट नै टेढोमेढो छ भने उसको बालककाल अति नै कष्टदायक हुन्छ ।

९. भाग्यरेखा आफ्नो उद्‌गमस्थलबाट प्रारम्भ भएर जुन पर्वततिर मोडिन्छ वा शनि पर्वतबाट त्यसमध्ये कुनै शाखा निस्केर जुन पर्वततिर जान्छ, त्यस पर्वतसित सम्बन्धित गुणहरूको विकास जीवनमा मिल्दछ ।

१०. यदि भाग्यरेखा जाँदाजाँदै रोकिन्छ भने त्यस व्यक्तिले जीवनमा धेरै बाधाहरूलाई भोग्दछ ।

११. हत्केलामा भाग्यरेखा जुन स्थानमा गहिरो, स्पष्ट र निर्दोष हुन्छ, जीवनको त्यस भागमा उसलाई विशेष लाभा वा सुख मिल्छ ।

१२. भाग्यरेखा हत्केलामा जति पटक टुट्छ, जीवनमा त्यति नै पटक महत्त्वपूर्ण मोड आउँछ वा कठिनाइहरूको सामना गर्नुपर्ने हुन्छ ।

१३ यदि भाग्यरेखा मणिबन्धबाट प्रारम्भ भएर माझी औंलामाथि चढ्छ भने यो दुर्भाग्यशालीको रूपमा लिइन्छ । जसको भाग्यरेखा यस्तो हुन्छ, उसलाई जीवनमा कुनै प्रकारको पनि कुनै सुख वा आनन्द मिल्दैन ।

१४. यदि भाग्यरेखा प्रथम मणिबन्धभन्दा पनि तल अर्थात् प्रथम मणिबन्धबाट औंलाहरू यदि लामा छन् र भाग्यरेखाको प्रारम्भ चन्द्र पर्वतबाट भएको छ भने यस्तो व्यक्ति प्रसिद्ध तान्त्रिक हुन्छ ।

१५. यदि भाग्यरेखाका साथमा कुनै सहायक रेखा छ भने यसलाई शुभ मानिन्छ । यदि औंलाहरू

२४. यदि भाग्यरेखा मस्तिष्क रेखाको नजिक समाप्त हुन्छ भने उसलाई जीवनमा बारम्बार निराशाको सामना गर्नुपर्ने हुन्छ ।

२५. भाग्यरेखामा जति मात्रामा टेडामेढा रेखाहरू हुन्छन्, तिनीहरू व्यक्तिको प्रगतिमा बाधक मानिन्छन् ।

२६. यदि भाग्यरेखाको समाप्तितिर ताराको चिह्न छ भने उसको वृद्धावस्था अति नै कष्टकम हुन्छ ।

२७. यदि भाग्यरेखा र विवाहरेखा परस्पर मिल्छ भने उसको गृहस्थजीवन दु:खमय हुन्छ ।

२८. यदि भाग्यरेखाबाट कुनै सहायक रेखा निस्कन्छ भने त्यो भाग्यलाई प्रबल बनाउनमा सहायक हुन्छ ।

२९. यदि यस रेखाको माथि वा तल शाखाहरू छन्

लामा छन् र भाग्य रेखाको प्रारम्भ चन्द्र पर्वतबाट हुन्छ भने यस्तो व्यक्ति प्रसिद्ध तान्त्रिक हुन्छ ।

१६. यदि चन्द्र पर्वतलाई काटेर भाग्यरेखा अगाडि बढेको छ भने त्यस व्यक्तिले जीवनमा कैयौं पटक विदेश यात्रा गर्दछ ।

१७. यदि भाग्यरेखाको उद्गम स्थानमा त्रिकोणको चिह्न छ भने त्यस व्यक्तिले आफ्नै प्रतिभाले उन्नति गर्दछ ।

१८. यदि भाग्यरेखाबाट केही शाखाहरू निस्केर माथितिर गएको देखिन्छ भने उसलाई अतुलनीय धनलाभ हुन्छ ।

१९. यदि भाग्यरेखा मस्तिष्करेखाबाट प्रारम्भ हुन्छ र मार्गमा धेरै ठाउँमा बाङ्गातिङ्गा रेखाहरू छन् भने त्यस व्यक्तिलाई वृद्धावस्थामा सफलता मिल्दछ ।

२०. भाग्यरेखा यदि शनि पर्वतमा वृत्ताकार बन्छ भने उसको जीवनमा अत्यधिक परिश्रमपछि मात्रै सफलता आाउँछ ।

२१. भाग्यरेखा यदि मस्तिष्क रेखाबाट प्रारम्भ हुन्छ र त्यसका शाखाहरू गुरु, सूर्य तथा बुध पर्वतमा गएका छन् भने त्यस व्यक्ति विश्वविख्यात हुन्छ ।

२२. यदि भाग्यरेखाको उद्गम स्थानमा तीन वा चार रेखाहरू निस्केका छन् भने यस्तो व्यक्तिको भाग्योदय विदेशमा हुन्छ ।

२३. यदि भाग्यरेखाको उद्गम स्थानमा एक सहायक रेखा शुक्र पर्वततिर जान्छ भने कुनै स्त्रीको माध्यमबाट उसको भाग्योदय हुन्छ ।

भने आर्थिक कष्ट उठाउनु पर्ने हुन्छ ।

३०. भाग्यरेखाको अन्तमा क्रस वा जाली छ भने उसको क्रुर हत्या हुन्छ ।

३१. यदि रेखाको अन्तमा चतुर्भुज छ भने त्यस व्यक्तिलाई धर्ममा विशेष आस्था हुन्छ ।

३२. भाग्यरेखामा धनको चिह्न शुभ मानिन्छ ।

३३. भाग्यरेखा गहिरो, स्पष्ट र लालिमायुक्त छ भने व्यक्तिले जीवनमा चाँडै प्रगति गर्दछ ।

वस्तुत: भाग्यमा नै जीवनका सबै कुराको सार संग्रहीत हुन्छ । अत: जसको हत्केलामा भाग्यरेखा प्रबल, स्पष्ट र सुन्दर हुन्छ त्यो व्यक्तिले चाँडै उन्नति गर्दछ र समाजमा सम्माननीय स्थान प्राप्त गर्दै भौतिक सुखको भोग गर्दछ ।

जय गुरुदेव !

# अमला

अमला अत्यन्त गुणकारी फल हो। यो अमिलो र गुलियो मिसिएको मीठो स्वादको हुन्छ। अमला धेरै नामले चिनिन्छ। संस्कृत भाषामा यसलाई श्रीफल, अमृतफल, शिवा, धात्री आदि भनिन्छ। फलमध्ये श्रेष्ठ भएकोले यसलाई श्रीफल भनिएको हो। अमृतजस्तै भएकोले अमृतफल भनिएको हो। कल्याणकारी भएकोले शिवा भनिएको हो। आमाले जस्तै माया गर्ने भएकाले धात्री भनिएको हो। अमला कति फाइदाजनक छ भन्ने कुरा यी नामहरूका अर्थबाटै हामी बुझ्न सक्छौं।

अमलाको रूख प्रायः सबै ठाउँमा पाइन्छ। यसको लामो डाँठमा दुवैतिर मिलेर रहेका मसिना पात हुन्छन्। यसको फूल हरियो मिसिएको पहेँलो रङको हुन्छ। यसका फूलहरू साना साना र गुच्छाका रूपमा फुलेका हुन्छन्। अमलाका फलहरू गोला हुन्छन्। फल काँचो अवस्थामा हरियो हुन्छ। यही कडा भागभित्र बीज हुन्छ।

अमलाको रूखमा पात झर्ने र फूल फुल्ने दुवै काम चैत-वैशाख महिनामा हुन्छ। यसको रूख जङ्गलमा जताततै पाइन्छ। यसलाई कमै मानिसले मात्र आफ्ना घर वरपर रोप्छन्। यो घरको सेरोफेरो र पाखो जमिन, जहाँ पनि रोप्न सकिन्छ।

योग, प्राकृतिक चिकित्सा, आयुर्वेद आदिका प्रभावशाली औषधीहरूमा यसको प्रयोग हुन्छ। अमलाको उपयोगी भाग भनेको यसको फल नै हो। अमला खानाले खाना नपच्ने, भोक नलाग्ने, दिसा सफा नहुने, मुखबाट डकार र अमिलो पानी आउनेजस्ता पेटका रोगहरू निको हुन्छन्। यसले आँखाको देख्न सक्ने शक्तिलाई बढाउँछ।

नियमित अमला खानाले शरीर स्वस्थ रहन्छ र लामो समयसम्म बाँच्न सकिन्छ। यसले रगतलाई शुद्ध र सफा बनाउँछ। रगतको कमीले हुने रोगबाट बचाउँछ। यसमा भिटामिन 'सी' अरू फलहरूमा भन्दा धेरै पाइन्छ। भनिन्छ, २ वटा सुन्तला वा मौसमी खानुभन्दा एउटा अमला खानु हितकर हुन्छ।

३ चम्चा अमलाको रस र एक चम्चा महलाई एक गिलास पानीमा मिलाएर दिनमा १ वा २ पटक खानाले शरीर सधैँ तन्दुरुस्त रहन्छ। यसो गर्न नसकेमा दैनिक २/३ वटा ताजा अमला खाए पनि हुन्छ। सुकाएको अमला पिसेर बनाएको चूर्णलाई १ चम्चा महमा फिटेर चाटे वा पानीसँग पिए पनि फाइदा गर्छ।

आयुर्वेदमा थुप्रै औषधीहरू अमलाबाट बनाइएको पाइन्छ। अमलाबाट बनेका औषधीहरूमा च्यवनप्राश, आमलकी रसायन, आमलक घृत, आमलकी अवलेह, आमलक चूर्ण आदि प्रसिद्ध छन्। अमलाको मिठाई, तितौरा, अचार आदि पनि बनाउन सकिन्छ। अमलाबाट बनाइएको मिठाईलाई मुरब्बा भनिन्छ। यो स्वादिलो र स्वास्थ्यबर्द्धक हुन्छ।

अमलाका रूखहरू कहिल्यै काट्नु हुँदैन। यस्तो गुणकारी फल दिने रूखलाई काट्नु भनेको आफ्नै हातखुट्टा काट्नुजस्तै हो। हामी पनि आजैदेखि धेरैभन्दा धेरै अमलाका रूख रोपौं। अमला खाऔं। निरोगी जीवन जिऔं।

**अमलाबाट हुने अरू केहि फाइदाहरू**

१. अमलाको रूखको बोक्राको रस ३ भाग र मह, बेसार १/१ भाग मिलाएर खाँदा धातुमेह रोग निको हुन्छ।

२. अमलाको गेडा भित्रको बीज घिउसँग पिसेर टाउकोमा लेप गरे नाकबाट रगत आउने रोग निको

हुन्छ ।

३. अमला सुकाएर पिँधेको धुलोलाई तातोपानी मिलाई १ ठूलो चम्चाभरि दिनको ३/४ पटक सेवन गरे पखाला ठीक हुन्छ ।

४. अमलाको बियाँ र पिपला काँचै धुलो बनाएर नियमित सेवन गरे (३० दिन) पित्तसम्बन्धी रोग निको हुन्छ ।

५. अमलाको रसमा चिनी मिसाई पिएमा आइमाईको पिसाब पोल्ने रोग निको हुन्छ ।

६. अमलाको बीज पिनेर तातो पानीसँग १ चिया चम्चा बिहान खानाअघि खाने गरे दम, खोकी र पित्तसम्बन्धी पेट दुख्ने व्यथा ठीक हुन्छ ।

७. अमलाको ताजा रस खानाले फोक्सोको रोग ठीक हुन्छ ।

८. अमलाको पात, बोक्रा र दाना सबै बराबर थिचेर रस बनाई एक चौथाई ४५ दिनसम्म खाए मधुमेह नाश हुन्छ ।

९. अमलालाई सुकाई कुटेर बिहान-बिहान २ चम्चा २१ दिनसम्म सेवन गर्नाले रक्तचाप कम हुन्छ ।

१०. अमलाको गेडा भुटेर धुलो बनाई तेलसँग मिसाएर लगाउँदा लुतो निको हुन्छ ।

११. सानो अमला निरन्तर केही समय खानाले श्वासको दुर्गन्ध हराउँछ ।

१२. गुप्ताङ्गमा घाउ भई किटाणु समेत परेमा सानो अमलाको रसमा थोरै कपुर फिटेर लगाउँदा निको हुन्छ ।

१३. अमलाको ताजा रस १० दिनसम्म सेवन गर्ने वा ३ भाग पानी र १ भाग चिनी मिसाई १/१ थोपा दिनको ३ पटक आँखामा लाउँदा आँखा तेज हुने र रोग हट्छ ।

१४. अमलाको सुकेको भित्री गेडा अंगुरको दानासँग चिनी मिलाई पकाएर निस्केको रस पानीसँग गलगल गरे ज्वरोबाट आएको अरूची ठीक गर्छ ।

१५. अमलाको काँचो दाना पिसेर नुहाउनाले कपाल कालो पार्छ ।

१६. अमलाको ताजा रस फलामको भाँडामा केही घण्टा राखी आधा चौथाई दिनको १ पटक ३० दिनसम्म पिउनाले कमलपित्त निको हुन्छ ।

१७. अमलाको जराको बोक्रा महसँग घोटेर लगाउनाले जुठो उछ्रने वा ओठको कुना फुटेको ठीक हुन्छ ।

१८. अमलाको सेवन लगातार गर्दा दन्त हर्ष रोगमा फाइदा हुन्छ । जय गुरुदेव !

## हार्दिक श्रद्धाञ्जलि

**जन्म** वि.सं. २०३०

**स्वर्गारोहण** २०६७/९/२८

**स्व. मीना मानन्धर**

**आरती सञ्चालन केन्द्र गोंगबुकी सक्रिय कार्यकर्ता मीना मानन्धरको असामयिक निधन भएको दु:खद घडीमा शोक सन्तप्त परिवारप्रति समवेदना प्रकट गर्दै मृतात्माको चिरशान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग हार्दिक प्रार्थना गर्दछौँ ।**

**– सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

## हार्दिक श्रद्धाञ्जलि

**जन्म** २००७ श्रावण

**स्वर्गारोहण** २०६७/९/०६

**स्व. महेश्वर न्यौपाने**

**सम्पर्क कार्यालय भक्तपुरका सक्रिय कार्यकर्ता महेश्वर न्यौपानेको असामयिक निधन भएको दु:खद घडीमा शोक सन्तप्त परिवारप्रति समवेदना प्रकट गर्दै मृतात्माको चिरशान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग हार्दिक प्रार्थना गर्दछौँ ।**

**– सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

# शिव शतनाम स्तोत्र

ॐ शिवो महेश्वरः शम्भुः पिनाकी शशिशेखरः ।
वामदेवो विरुपाक्षः कपर्दी नीललोहितः ।।१।।
शङ्करः शूलपाणिश्च खटवाङ्गी विणुवल्लभः ।
शिपिविष्टोम्बिकानाथः श्रीकण्ठो भक्तवत्सलः ।।२।।
भव सर्वस्त्रिलोकेशः शितिकण्ठः शिवाप्रियाः ।
उग्रः कपाली कामारिरन्धकासुरसूदनः ।।३।।
गङ्गाधरो ललाटाक्षः कालकालः कृपानिधिः ।
भीमः पशुहस्तश्व मृगपाणिर्जटाधरः ।।४।।
कैलासवासी कवची कठोरस्त्रिपुरान्तकः ।
वृषङ्को ाभारुढो भस्मोद्धूलितविग्रहः ।।५।।
सामप्रियः स्वरमयस्त्रयी मूतिरनीश्वः ।
सर्वज्ञः परमात्मा च सोमसूर्याग्निलोचनः ।।६।।
हविर्यज्ञमयः सोमः पञ्चवक्त्रः सदाशिवः ।
विश्वेश्वरो वीरभद्रो गणनाथः प्रजापतिः ।।७।।
हिरण्यरेता दुर्द्धर्षो गिरीशो गिरिशोऽनघः ।
भुजङ्ग भूषणो भर्गो गिरिधन्वा गिरिप्रियाः ।।८।।
कृत्तिवासाः पुरारातिर्भग वान्प्रमथाधिपः ।
मृत्युंजयः सूक्ष्मतनर्जगद्व्यापी जगद्गुरुः ।।९।।
व्योमकेशो महासेनो जनकश्चारुविक्रमः ।
रुद्रो भूतपतिः स्थाणुरहिबुध्न्योदिगम्बरः ।।१०।।
अष्टमूर्तिरनेकात्मा सात्त्विकः शुद्धविग्रहः ।
शाश्वतः खण्डपरशुरजः पाशविमोचक ।।११।।
मृडः पशुपतिर्द्देवो महादेवोऽव्ययः प्रभु ।
पूषदन्तभिदव्यग्रो दक्षाध्वर हरो हरः ।।१२।।
भगनेत्रभिदव्यक्तः सहस्राक्षः सहस्रपात् ।
अपवर्गप्रदोऽनन्तस्तारकः परमेश्वरः ।।१३।।
इमानि दिव्यनामानि जप्यन्ते सर्वदा मया ।
नामकल्पतेयं मे सर्वाभीष्टप्रदायिनी ।।१४।।
नामान्येतानि सुभगे शिवदानि न संशयः ।
वेदसर्वस्वभूतानि नामान्येतानि वस्तुतः ।।१५।।
एतानि यानि नामानि तानि सर्वार्थैदान्यतः ।
जप्यन्ते सादरं नित्यं मया नियमपूर्वकम् ।।१६।।
वेदेषु शिवनामानि श्रेष्ठान्यघहराणि च ।
सन्त्यनन्तानि सुभगे वेदेषु विविधधेष्यपि ।।१७।।
तेयो नामानि संगृह्य कुमाराय महेश्वरः ।
अष्टोत्तरसहस्रं तु नाम्नामुपदिशत्पुरा ।।१८।।

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन तथा
अन्तर्राष्ट्रिय साधना शिविरको पावन अवसरमा प्रकाशित
पूजनीय माताजीबाट विमोचित

मात्र रु. १५१।-

**परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूको**
**जीवनीबारे लेखिएको पहिलो ग्रन्थ**
**सम्पूर्ण शिष्यहरुले एकपटक पढ्नै पर्ने**

ग्रन्थ प्राप्त गर्न सिद्धाश्रम शक्ति केन्द्र केन्द्रीय कार्यालय वसुन्धरा (फोन ३१००१५३) अथवा सम्पर्क कार्यालयहरु, आरती केन्द्रहरुमा सम्पर्क गर्नुहोला ।

आश्रम गतिविधि

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनुभएको अंग्रेजी महिनाको २१ तारीखको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले यस तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको छ। यसै क्रममा गत माघ ७ गते तदनुसार २१ जनवरी, २०१० का दिन बसुन्धरा आश्रममा उक्त कार्यक्रम सम्पन्न भयो ।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक रूपमा सस्वर पाठ, गुरू पादुका पूजन, गुरुमन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रमहरू सम्पन्न भएका थिए ।

कार्यक्रममा आरतीपछि भजनकीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए। प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले बोल्नुभएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

माघ ३ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । माघ ४ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । माघ ५ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । माघ ६ गते विहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

माघ ५ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे । माघ ६ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । माघ ४ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे। पौष ६ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे ।

## श्री महासरस्वती पूजन

सिद्धाश्रम शक्ति केन्द्र नेपालले विभिन्न चाडपर्वका अतिरिक्त अन्य शुभ अवसर हरूमा विभिन्न मांगलिक कार्यहरू सम्पन्न गर्दै आइरहेको छ । आफ्नो रीतिरिवाज र परम्परालाई अक्षुण्ण राख्ने क्रममा हुने गरेका मांगलिक कार्यक्रमहरू अति नै महत्त्वपूर्ण हुने गरेको छ ।

यसै क्रममा गत माघ २५ गते वसन्तपञ्चमीका दिन विद्याकी अधिष्ठात्रीदेवी श्री महासरस्वतीको पूजन सम्पन्न गरियो ।

दिउँसो ९:०० बजे शुभारम्भ भएको उक्त पूजन कार्यक्रममा गुरु पादुका पूजन, महासरस्वती पूजन, आरती, भजनकीर्तनका क्रमहरू चलेका थिए ।

विद्यार्थीलगायत अन्य साधकसाधिका र भक्तजनहरूको सहभागिता रहेको उक्त पूजन परमपूज्य सद्‌गुरुदेवहरूको नित्य आरतीपछि सम्पन्न भएको थियो ।

## समीक्षात्मक कार्यक्रम

गत माघ २२ र २३ गते सम्पन्न पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविरको समीक्षा गर्न यही माघ मसान्त (२९ गते) मा सिद्धाश्रम शक्ति केन्द्रले समीक्षात्मक कार्यक्रमको आयोजना गर्‍यो । दिउँसो काठमाडौंको बसुन्धरामा अवस्थित गोरक्ष निखिल ज्योति विद्याश्रमको प्रांगणमा आयोजित द्विदिवसीय उक्त ऐतिहासिक कार्यक्रममा भए गरेका कार्यहरूका बारेमा प्रकाश पारिएको थियो भने कार्यक्रम सम्पन्न गर्ने क्रममा हुन गएका कमी कमजोरीहरूप्रति क्षमायाचना गरिएको थियो ।

कार्यक्रममा अभिनन्दन समारोह आयोजना र साधना शिविर संचालनका लागि गठित उपसमितिका संयोजकहरूले आ-आफ्ना उपसमितिहरूले गरेका कार्यहरूको जानकारी गराउनुभएको थियो। स्मरण रहोस्, अभिनन्दन कार्यक्रम तथा साधना शिविर संचालननार्थ सिद्धाश्रम शक्ति केन्द्र कार्यक्रम मूल आयोजक समितिका १७ ओटा उपसमितिहरू गठन गरिएका थिए जसमा सिद्धाश्रम शक्ति केन्द्रका विभिन्न जिल्लाहरूमा रहेका सम्पर्क कार्यालयहरूलगायतको सहभागिता रहेको थियो। अधिराज्यभरिका सम्पूर्ण आरती संचालन केन्द्र, कन्ट्याक्ट प्वाइन्टहरू पनि कार्यक्रममा निकै सक्रियतापूर्वक लागेका थिए ।

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको भर्खरै सम्पन्न भएको नेपाल आगमनले नेपालभूमि कृतकृत भएको छ। यहाँको माटोले अहिले पनि उहाँको सुगन्ध बोकिरहेको छ।

जसलाई हृदयमा विराजमान गराइन्छ, जसको पूजा गरिन्छ, जसको जयकार गरिन्छ, जोसँग अत्यन्त भावभक्तिले प्रार्थना गरिन्छ, उहाँलाई प्रत्यक्षरुपमा देख्न पाउनु सबै साधक साधिकाहरुको लागि अत्यन्त हर्ष र कौतुहलको विषय रह्यो। यही कारणले नै जब माता एयरपोर्टबाट नेपाल भित्रिनुभयो, त्यस समयदेखि उहाँ यहाँ रहनुभएसम्म साधकसाधिकाहरुको भावभक्ति, छटपटी, पुकार, आँशु यसरी उर्लियो कि त्यसलाई थाम्न नै मुस्किल पर्‍यो।

जगत्जननीलाई प्रत्यक्षरुपमा देख्न पाउनु, उहाँको वाणी सुन्न पाउनु, उहाँलाई छुन पाउनु, उहाँ हिंड्नुभएको हेर्न पाउनु, मानवजीवनको नै परम सौभाग्य हो। यो कुरा मानवजीवनको नै एउटा विशेष सम्पत्ति बन्दछ। तसर्थ, माताजीको नेपाल आगमनले हजारौँहजार साधकसाधिकाहरुको जीवन धन्य धन्य बनेको छ।

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपास्वरुप पूजनीय गुरुमाता र अरविन्द गुरुदेवको समुपस्थितिमा सम्पन्न भएको पूजनीय गुरुमाताको अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविर कार्यक्रम ऐतिहासिकरुपमा सफल रह्यो। कार्यक्रमभरि गुरुकृपा, गुरुऊर्जा यसरी वर्षियो कि त्यसको अभिव्यक्ति सम्भव नै भएन।

शिविरभरि सद्गुरुदेवहरुको विशेष उपस्थितिको आभाष धेरैलाई भयो। शिविरभरि गुरुसेवक सेविकाहरु चौबीसै घण्टा खट्नुभयो। त्यस समय यति व्यस्तता थियो कि न कसैलाई खाने फुर्सद थियो, न सुत्ने नै। तर पनि कसैलाई भोक, प्यास, निद्राको महसुस नै भएन, सबैजना दिव्य ऊर्जाको वर्षात्मा भिजिरहेका थिए।

कार्यक्रम ऐतिहासिकरुपमा सफल रह्यो। सिद्धाश्रम शक्ति केन्द्र नेपालले अहिलेसम्म आयोजना गरेका कार्यक्रमहरुमा सबैभन्दा ठूलो कार्यक्रम यो थियो र यो कार्यक्रम नै अहिलेसम्मको सबैभन्दा सफल कार्यक्रम रह्यो। पूजनीय गुरुमाताले पहिलोपटक गुरुमंत्र प्रदान गर्नु, माता र अरविन्द गुरुदेवले काष्ठमण्डपमा गुरु गोरखनाथको पूजा गर्नु कार्यक्रमको विशिष्टता रह्यो भने पूजनीय गुरुमाता, अरविन्द गुरुदेव तथा भारतबाट आउने धेरै गुरुसेवकसेविकाहरुबाट कार्यक्रमको धेरै धेरै प्रशंसा भयो। उहाँहरु सबैले कार्यक्रमको व्यवस्थापनको, सजावटको, भव्यताको र सबैभन्दा बढी सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ताहरुको भावभक्ति र अनुशासनको मुरीमुरी प्रशंसा गर्नुभयो। यो प्रशंसा र बधाइको क्रममा सबैभन्दा मर्मस्पर्शी अभिव्यक्ति पूजनीय गुरुमाताको नै रह्यो। उहाँले यस कार्यक्रमलाई सद्गुरुदेवले शरीर छाड्नु भएपछिको सबैभन्दा राम्रो कार्यक्रम भन्नुभयो र कार्यक्रममा उहाँ उपस्थित हुनुभएको दोस्रो दिनलाई गुरुदेवले शरीर छाड्नु भएपछिको १२ वर्षको अवधिमा उहाँको सबैभन्दा खुसीको दिन भन्नुभयो।

योभन्दा ठूलो कस्तो उद्गारको अपेक्षा गर्ने र योभन्दा ठूलो प्रशंसा अरु के हुन सक्ला ?

यस कार्यक्रमको ऐतिहासिक सफलता र गुरुमाताको यस अभिव्यक्तिले सिद्धाश्रम शक्ति केन्द्रलाई धेरै माथि उठाइदिएको छ, राष्ट्रियबाट अन्तर्राष्ट्रिय बनाइदिएको छ र सबैको आशा, भरोसा र विश्वासको केन्द्रविन्दु बनाइदिएको छ।

यस्तो अद्वितीय कार्यक्रमको आयोजना गर्ने र पूजनीय गुरुमाताबाट यस्तो अभिव्यक्ति प्राप्त गर्ने सिद्धाश्रम शक्ति केन्द्रका सबै कार्यकर्ताहरु मुरिमुरि बधाइका पात्र हुनुहुन्छ।

गो.हु.का.द.नं. ६२/०६७/६८ का.जि.द.नं. ७०/०५६

# Gorakshya Nikhil Jyoti Divya Vidyashram

A Complete English Medium School

- After a glorious six years of completion, now GNJDV is in its 7th year.
- A complete school with the blessing of Sadgurudevs for modern education in spiritual environment where students learn not only the bookish knowledge but also the moral norms and values.
- Montessori based primary classes.
- A school for your child's multi dimensional development through different ECA-CCA, indoor, outdoor programs plus spiritual stuffs.
- Frequent special counseling programs by child psychologists.

**Admission Open for PLAYGROUP TO VIII**

**Special Package for Boarders**

**HURRY UP ! Limited Seats Only**

Basundhara, Chakrapath, Kathmandu, Tel: 4355737, 4355789